श्रीराधाकृष्णाभ्यां नमः

महर्षि वेदव्यास कृत

# श्रीमद्भागवत महापुराण

# (महात्म्य)

नेपाली अनुवाद सहितम्

प्रकाशक

श्रीहरिव्यास निकुंज मन्दिर

वृन्दावन, मथुरा, उत्तरप्रदेश, भारत

श्रीराधाकृष्णाभ्यां नमः

महर्षि वेदव्यास कृत

# श्रीमद्भागवत महापुराण

# (महात्म्य)

नेपाली अनुवाद सहितम्

अनुवाद

कृष्णशरण पोखरेल

प्रकाशक

श्रीहरिव्यास निकुंज मन्दिर

वृन्दावन, मथुरा, उत्तरप्रदेश, भारत

# श्रीमद्भागवत माहात्म्यम्

★★★

कृष्णं नारायणं वन्दे कृष्णं वन्दे व्रजप्रियम्।
कृष्णं द्वैपायनं वन्दे कृष्णं वन्दे व्रजप्रियम॥

★★★

# अथ प्रथमोऽध्याय

## देवर्षि नारदको भक्तिसे भेंट

**सच्चिदानन्दरूपाय विश्वोत्पत्त्यादिहेतवे ।**
**तापत्रयविनाशाय श्रीकृष्णाय वयं नुमः ॥ १ ॥**

**यं प्रव्रजन्तमनुपेतमपेतकृत्यं**
**द्वैपायनो विरहकातर आजुहाव।**
**पुत्रेति तन्मयतया तरवोऽभिनेदु-**
**स्तं सर्वभूतहृदयं मुनिमानतोऽस्मि॥ २ ॥**

**नैमिषे सूतमासीनमभिवाद्य महामतिम् ।**
**कथामृतरसास्वादकुशलः शौनकोऽब्रवीत् ॥ ३ ॥**

**शौनक उवाच**

**अज्ञानध्वान्तविध्वंसकोटिसूर्यसमप्रभ ।**
**सूताख्याहि कथासारं मम कर्णरसायनम् ॥ ४॥**

**भक्तिज्ञानविरागाप्तो विवेको वर्धते महान्।**
**मायामोहनिरासश्च वैष्णवैः क्रियते कथम् ॥ ५॥**

**इह घोरे कलौ प्रायो जीवश्चासुरतां गतः।**
**क्लेशाक्रान्तस्य तस्यैव शोधने किं परायणम् ॥ ६ ॥**

सच्चिदानन्दस्वरूप भगवान् श्रीकृष्णलाई हामी नमस्कार गर्दछौं, जो जगत्को उत्पत्ति, स्थिति र विनाशको हेतु तथा आध्यात्मिक,आधिदैविक र आधिभौतिक यी तीनै प्रकारका तापहरूको नाशक हुनुहुन्छ॥१॥ जुन समय श्रीशुकदेवजीको यज्ञोपवीत-संस्कार पनि भएको थिएन तथा लौकिक-वैदिक कर्महरूको अनुष्ठानको अवसर पनि आएको थिएन, त्यतिबेलै उहाँलाई एक्लै नै संन्यास लिनको लागि घरबाट जाँदै गरेको देखेर उहाँको पिता व्यासजी विरहले कातर भई बोलाउन लाग्नुभयो -'छोरो! छोरो! तिमी कहाँ गईरहेको छौ?' त्यस समय वृक्षहरूले तन्मय भएको कारण श्रीशुकदेव-जीको तर्फबाट उत्तर दिएका थिए। यस्ता सर्वभूत-हृदयस्वरूप श्रीशुकदेवमुनिलाई म नमस्कार गर्दछु॥२॥ एकपल्ट भगवत्कथामृतको रसास्वादन गर्नमा कुशल मुनिवर शौनकजीले नैमिषारण्य क्षेत्रमा विराजमान महामति सूतजीलाई नमस्कार गरेर उहाँ संग सोधे॥३॥ **शौनकजीले सोध्नुभयो**-सूतजी! हजुरको ज्ञान अज्ञा-नान्धकारलाई नष्ट गर्नको लागि करोड़ौं सूर्यहरूको समान छ। हजुर हाम्रा कानहरूका लागि रसायन-अमृतस्वरूप सारगर्भित कथा भन्नुहोस॥४॥ भक्ति, ज्ञान और वैराग्यद्वारा प्राप्त हुने महान् विवेकको वृद्धि कसरी हुन्छ तथा वैष्णवजन कसरी यस माया-मोहबाट आफ्नो पीछा छुटाउँछन?॥५॥ यस घोर कलिकालमा जीव प्रायः आसुरी स्वभावका भएका छन्, विविध क्लेशहरूले आक्रान्त यी जीवहरूलाई शुद्ध (दैवीशक्तिसम्पन्न) बनाउने सर्वश्रेष्ठ उपाय के छ?॥६॥ सूतजी! हजुर हामीलाई कुनै यस्तो

**श्रेयसां यद्भवेच्छ्रेयः पावनानां च पावनम्।**
**कृष्णप्राप्तिकरं शश्वत्साधनं तद्वदाधुना ॥ ७ ॥**

**चिन्तामणिर्लोकसुखं सुरद्रुः स्वर्गसम्पदम्।**
**प्रयच्छति गुरुः प्रीतो वैकुण्ठं योगिदुर्लभम् ॥ ८ ॥**

**सूत उवाच**

**प्रीतिः शौनक चित्ते ते ह्यतो वच्मि विचार्य च।**
**सर्वसिद्धान्तनिष्पन्नं संसारभयनाशनम् ॥ ९ ॥**

**भक्त्योघवर्धनं यच्च कृष्णसंतोषहेतुकम्।**
**तदहं तेऽभिधास्यामि सावधानतया शृणु ॥१०॥**

**कालव्यालमुखग्रासत्रासनिर्णाशहेतवे ।**
**श्रीमद्भागवतं शास्त्रं कलौ कीरेण भाषितम् ॥११॥**

**एतस्मादपरं किञ्चिन्मनःशुद्ध्यै न विद्यते।**
**जन्मान्तरे भवेत्पुण्यं तदा भागवतं लभेत् ॥१२॥**

**परीक्षिते कथां वक्तुं सभायां संस्थिते शुके।**
**सुधाकुम्भं गृहीत्वैव देवास्तत्र समागमन् ॥१३॥**

**शुकं नत्वावदन् सर्वे स्वकार्यकुशलाः सुराः।**
**कथासुधां प्रयच्छस्व गृहीत्वैव सुधामिमाम् ॥१४॥**

**एवं विनिमये जाते सुधा राज्ञा प्रपीयताम्।**
**प्रपास्यामो वयं सर्वे श्रीमद्भागवतामृतम् ॥१५॥**

**क्व सुधा क्व कथा लोके क्व काचः क्वमणिर्महान्।**
**ब्रह्मरातो विचार्यैवं तदा देवाञ्जहास ह ॥१६॥**

**अभक्तांस्तांश्च विज्ञाय न ददौ स कथामृतम्।**
**श्रीमद्भागवती वार्ता सुराणाममपि दुर्लभम् ॥१७॥**

**राज्ञो मोक्षं तथा वीक्ष्य पुरा धातापि विस्मितः।**

शाश्वत साधन बताउनु होस, जो सबैभन्दा अधिक कल्याणकारी तथा पवित्र गर्नेहरूमा पनि पवित्र होस तथा जसले भगवान् श्रीकृष्णको प्राप्ति गराईदेओस ॥७॥ चिन्तामणि केवल लौकिक सुख दिन सक्दछ र कल्पवृक्ष अधिक-भन्दा-अधिक स्वर्गीय सम्पत्ति दिन सक्दछ परन्तु गुरुदेव प्रसन्न भएर भगवान्को योगिदुर्लभ नित्य वैकुण्ठ धाम दिन सक्नुहुन्छ॥८॥

**सूतजीले भन्नुभयो**-शौनकजी! तपाई हृदयमा भगवान्को प्रेम छ यसैले म विचार गरेर तपाईलाई सम्पूर्ण सिद्धान्तहरूको निष्कर्ष सुनाउँदछु, जुन जन्म-मृत्युको भयको नाश गरिदिन्छ॥९॥ जुन भक्तिको प्रवाहलाई बढ़ाउँदछ र भगवान् श्रीकृष्णको प्रसन्नताको प्रधान कारण हो, म तिमीलाई त्यो साधन बताउँदछु तपाई सावधान भएर सुन्नुहोस॥१०॥ श्रीशुकदेवजीले कलियुगमा जीवहरू कालरूपी सर्पको मुखको ग्रास हुने त्रासको आत्यन्तिक नाश गर्नको लागि श्रीमद्भागवत- शास्त्रको प्रवचन गर्नुभएको छ॥११॥ मनको शुद्धिको लागि यो भन्दा ठूलो अरू कुनै छैन। जब मनुष्यको जन्म-जन्मान्तरको पुण्य उदय हुन्छ, तब उसलाई यस भागवतशास्त्रको प्राप्ति हुन्छ ॥१२॥ जब शुकदेवजी राजा परीक्षित्लाई यो कथा सुनाउनको लागि सभामा विराजमान हुनुभयो, तब देवताहरू उहाँको समीपमा अमृतको कलश लिएर आए॥१३॥ देवता आफ्नो काम बनाउनमा बड़ो कुशल हुन्छन् अतः यहाँ पनि सबैले शुकदेवमुनिलाई नमस्कार गरेर भने-'हजुर यो अमृत लिएर बदलामा हामीलाई कथामृतको दान दिनुहोस॥१४॥ यस प्रकार परस्पर विनिमय द्धअदला-बदलीऋ भएपछि राजा परीक्षित् अमृतको पान गरून् र हामी सबै श्रीमद्भागवतरूप अमृतको पान गर्नेछौं ॥१५॥ यस संसारमा कहाँ काँच र कहाँ महामूल्य मणि तथा कहाँ सुधा र कहाँ कथा? श्रीशुकदेवजीले द्धयो सोचेरऋ त्यस समय देवताहरूको हँसी उड़ाईदिनुभयो॥१६॥ डनीहरूलाई भक्तिशून्य द्धकथाको अनधिकारीऋ जानेर कथामृतको दान गर्नुभएन। यस प्रकार यो श्रीमद्भागवतको कथा देवताहरूलाई पनि दुर्लभ छ॥१७॥ पूर्वकालमा

**सत्यलोके तुलां बद्ध्वातोलयत्साधनान्यजः॥१८॥**

**लघूनन्यानि जातानि गौरवेण इदं महत्।**
**तदा ऋषिगणाः सर्वे विस्मयं परमं ययुः॥१९॥**

**मेनिरे भगवद्रूपं शास्त्रं भागवतं कलौ।**
**पठनाच्छ्रवणात्सद्यो वैकुण्ठफलदायकम्॥२०॥**

**सप्ताहेन श्रुतं चैतत्सर्वथा मुक्तिदायकम्।**
**सनकाद्यैः पुरा प्रोक्तं नारदाय दयापरैः॥२१॥**

**यद्यपि ब्रह्मसम्बन्धाच्छ्रुमेतत्सुरर्षिणा।**
**सप्ताहश्रवणविधिः कुमारैस्तस्य भाषितः॥२२॥**

**शौनक उवाच**

**लोकविग्रहमुक्तस्य नारदस्यास्थिरस्य च।**
**विधिश्रवे कुतः प्रीतिः संयोगः कुत्र तैः सह॥२३॥**

**सूत उवाच**

**अत्र ते कीर्तयिष्यामि भक्तियुक्तं कथानकम्।**
**शुकेन मम यत्प्रोक्तं रहः शिष्यं विचार्य च॥२४॥**

**एकदा हि विशालायां चत्वार ऋषयोऽमलाः।**
**सत्सङ्गार्थं समायाता ददृशुस्तत्र नारदम्॥२५॥**

**कुमारा ऊचुः**

**कथं ब्रह्मन्दीनमुखः कुतश्चिन्तातुरो भवान्।**
**त्वरितं गम्यते कुत्र कुतश्चा गमनं तव॥२६॥**

**इदानीं शून्यचित्तोऽसि गतवित्तो यथा जनः।**
**तवेदं मुक्तसङ्गस्य नोचितं वद कारणम्॥२७॥**

**नारद उवाच**

**अहं तु पृथिवीं यातो ज्ञात्वा सर्वोत्तमामिति।**
**पुष्करं च प्रयागं च काशीं गोदावरी तथा॥२८॥**

श्रीमद्भागवतको श्रवणले नै राजा परीक्षित्को मुक्ति देखेर ब्रह्माजीलाई पनि ठूलो आश्चर्य भएको थियो। उहाँले सत्यलोकमा तराजु बाँधेर सबै साधनहरूलाई तौलिनु भयो॥१८॥ अन्य सबै साधन तौलमा हलुका भए, आफ्नो महत्त्वको कारण भागवत नै सबैभन्दा भारी भयो। यो देखेर सबै ;षिहरूलाई ठूलो विस्मय भयो॥१९॥ उहाँले कलियुगमा यस भगवद्रूप भागवतशास्त्र नै पढ्नाले तथा सुन्नाले तत्काल मोक्ष दिनेवाला निश्चय गर्नुभयोघ्२द्ध सप्ताह–विधिद्वारा श्रवण गर्नाले यो निश्चय भक्ति प्रदान गर्दछ। पूर्वकालमा यसलाई दयापरायण सनकादिले देवर्षि नारदलाई सुनाउनु भएको थियो॥२१॥ यद्यपि देवर्षिले पहिले ब्रह्माजीको मुखबाट यसलाई श्रवण गर्नुभएको थियो, तथापि सप्ताहश्रवणको विधि त उहाँलाई सनकादिहरूले नै बताउनु भएको थियो॥२२॥

**शौनकजीले सोध्नुभयो**–सांसारिक प्रपंचबाट मुक्त एवं विचरणशील नारदजीको सनकादिको साथ संयोग कहाँ भयो र विधि–विधानको श्रवणमा उहाँको प्रीति कसरी भयो ?॥२३॥

**सूतजीले भन्नुभयो**–अब म तपाईलाई त्यो भक्तिपूर्ण कथानक सुनाउँदछु, जुन श्रीशुकदेवजीले मलाई आफ्नो अनन्य शिष्य जानेर एकान्तमा सुनाउनु भएको थियो॥२४॥ एक दिन विशालापुरीमा ती चारै निर्मल ;षिहरू सत्संगको लागि आउनुभयो। त्यहाँ सनकादिहरूले नारदजीलाई देख्नुभयो॥२५॥

**सनकादिले सोध्नुभयो**–ब्रह्मन्! तपाईको मुख उदास किन भईरहेको छ? तपाई चिन्तातुर कसरी हुनुभयो? यति छिटो–छिटो तपाई कहाँ गईरहनु भएको छ? र तपाईको आगमन कहाँबाट भईरहेको छ?॥२६॥ यतिखेर त तपाई त्यस पुरुषको समान व्याकुल देखिनुहुन्छ जसको सारा धन लुटिएको होस तपाई जस्तो आसक्तिरहित पुरुषहरूको लागि यो उचित होईन। यसको कारण भन्नुहोस॥२७॥

**नारदजीले भन्नुभयो**–म सर्वोत्तम लोक संझेर पृथ्वीमा आएको थिए। यहाँ पुष्कर, प्रयाग, काशी, गोदावरी (नासिक), हरिद्वार, कुरुक्षेत्र, श्रीरंग र सेतुबन्ध आदि

**हरिक्षेत्रं कुरुक्षेत्रं श्रीरङ्गं सेतुबन्धनम्।**
**एवमादिषु तीर्थेषु भ्रममाण इतस्ततः॥२९॥**

**नापश्यं कुत्रचिच्छर्म मनस्संतोषकारकम्।**
**कलिनाधर्ममित्रेण धरेयं बाधिताधुना॥३०॥**

**सत्यं नास्ति तपः शौचं दया दानं न विद्यते।**
**उदरम्भरिणो जीवा वराकाः कुटभाषिणः॥३१॥**

**मन्दाः सुमन्दमतयो मन्दभाग्या ह्युपद्रुताः।**
**पाखण्डनिरताः सन्तो विरक्ताः सपरिग्रहाः॥३२॥**

**तरुणिप्रभुता गेहे श्यालको बुद्धिदायकः।**
**कन्याविक्रयिणो लोभाद्दम्पतीनां च कल्कनम्॥३३॥**

**आश्रमा यवनै रुद्धास्तीर्थानि सरितस्तथा।**
**देवतायतनान्यत्र दुष्टैर्नष्टानि भूरिशः॥३४॥**

**न योगी नैव सिद्धो वा न ज्ञानी सत्क्रियो नरः।**
**कलिदावानलेनाद्य साधनं भस्मतां गतम्॥३५॥**

**अट्टशूला जनपदाः शिवशूला द्विजातयः।**
**कामिन्यः केशशूलिन्यः सम्भवन्ति कलाविह॥३६॥**

**एवं पश्यन् कलेर्दोषान् पर्यटन्नवनीमहम्।**
**यामुनं तटमापन्नो यत्र लीला हरेरभूत्॥३७॥**

**तत्राश्चर्यं मया दृष्टं श्रूयतां तन्मुनीश्वराः।**
**एका तु तरुणी तत्र निषण्णा खिन्नमानसा॥३८॥**

**वृद्धौ द्वौ पतितौ पार्श्वे निःश्वसन्ता वचेतनौ।**
**शुश्रूषन्ती प्रबोधन्ती रुदती च तयो पुरः॥३९॥**

**दशदिक्षु निरीक्षन्ती रक्षितारं निजं वपुः।**
**वीज्यमाना शतस्त्रीभिर्बोध्यमाना मुहुर्मुहुः॥४०॥**

धेरै तीर्थहरूमा म यता–उति घुमिरहें किन्तु मलाई कतै पनि मनलाई संतोष दिने शान्ति मिलेन। यस समय अधर्मको सहायक कलियुगले सम्पूर्ण पृथ्वीलाई पीड़ित गरिरहेको छ॥२८–३०॥ अब यहाँ सत्य, तप, शौच (बाहिर–भित्रको पवित्रता), दया, दान आदि केहि पनि छैन। बिचारा जीवहरू केवल आफ्ना पेट पालनमा लागेका छन्। ती असत्यभाषी, आलसी, मन्दबुद्धि, भाग्यहीन, उपद्रवग्रस्त हुन पुगेका छन्। जो साधु संत भनिन्छन्, ती पूरै पाखण्डी हुनथाले हेर्नमा त ती विरक्त छन्, किन्तु स्त्री–धन आदि सबैको परिग्रह गर्दछन्। घरहरूमा स्त्रिहरूको राज्य छ, साला सल्लाहकार बनेका छन्, लोभले मान्छेहरू कन्या विक्रय गर्दछन् र स्त्री–पुरुषहरूमा कलह मच्चिरहन्छ॥३१–३३॥ महात्माहरूको आश्रम, तीर्थ र नदिहरूमा यवन (विधर्मिहरू) को अधिकार भईसकेको छ। ती दुष्टहरूले धेरै देवालयहरू पनि नष्ट गरिदिएका छन॥ ३४॥ यस समय यहाँ न कोही योगी छ न कुनै सिद्ध छ न ज्ञानी छ र न सत्कर्म गर्नेहरू नै छन्। सम्पूर्ण साधनहरू यस समय कलिरूप दावानलले जलेर भस्म भएका छन्॥३५॥ यस कलियुगमा सबै देशवासी बजारमा अन्न बेच्न थालेका छन्, ब्राह्मणहरू पैसा लिएर वेद पढाउँछन् र स्त्रिहरू वेश्यावृत्तिद्वारा निर्वाह गर्न थालेका छन्॥३६॥ यस प्रकार कलियुगको दोषहरूलाई हेर्दै र पृथ्वीमा विचरण गर्दै म यमुनाजीको तटमा पुगें, जहाँ भगवान् श्रीकृष्णका अनेकौं लीलाहरू भईसकेका छन्॥३७॥ मुनिवरहरू! सुन्नुहोस, त्यहाँ मैले एक बड़ो आश्चर्य देखें। त्यहाँ एउटी युवती स्त्री खिन्न मनले बसेकी थिईन्॥३८॥ उनको नजिकै दुई वृद्ध पुरुष अचेत अवस्थामा परि जोर–जोरले सास फेरिरहेका थिए। त्यो तरुणी उनीहरू को सेवा गर्दै बेला–बेलामा जगाउने प्रयत्न गर्थिन् र कहिले उनीहरूको अगाडि रुन लाग्दथिन्॥३९॥ तिनी आफ्नो शरीरको रक्षक परमात्मालाई दशै दिशाहरूमा हेरिरहेकी

दृष्ट्वा दूराद्गतः सोऽहं कौतुकेन तदन्तिकम्।
मां दृष्ट्वा चोत्थिता बाला विह्वला चाब्रवीद्वचः ॥४१॥

बालोवाच

भोः भोः साधो क्षणं तिष्ठ मच्चिन्तामपि नाशय।
दर्शनं तव लोकस्य सर्वथाघहरं परम् ॥४२॥
बहुधा तव वाक्येन दुःखशान्तिर्भविष्यति।
यदा वाक्यं भवेद्भूरि भवतो दर्शनं तदा ॥४३॥

नारद उवाच

कासि त्वं काविमौ चेमा नार्यः काः पद्मलोचनाः।
वद देवि सविस्तारं स्वस्य दुःखस्य कारणम् ॥४४॥

बालोवाच

अहं भक्तिरिति ख्याता इमौ मे तनयौ मतौ।
ज्ञानवैराग्यनामानौ कालयोगेन जर्जरौ ॥४५॥
गङ्गाद्याः सरितश्चेमा मत्सेवार्थं समागताः।
तथापि न च मे श्रेयः सेवितायाः सुरैरपि ॥४६॥
इदानीं शृणु मद्वार्ता सचित्तस्त्वं तपोधन।
वार्ता मे वितताप्यस्ति तां श्रुत्वा सुखमावह ॥४७॥
उत्पन्ना द्रविडे साहं वृद्धिं कर्णाटके गता।
क्वचित्क्वचिन्महाराष्ट्रे गुर्जरे जीर्णतां गता ॥४८॥
तत्र घोरकलेर्योगात्पाखण्डैः खण्डिताङ्गका।
दुर्बलाहं चिरं याता पुत्राभ्यां सह मन्दताम् ॥४९॥
वृन्दावनं पुनः प्राप्य नवीनेव सुरूपिणी।
जाताहं युवती सम्यक्श्रेष्ठरूपा तु साम्प्रतम् ॥५०॥
इमौ तु शयितावत्र सुतौ क्लिश्यतः श्रमात्।
इदं स्थानं परित्यज्य विदेशं गम्यते मया ॥५१॥
जरठत्वं समायातौ तेन दुःखेन दुःखिता।
साहं तु तरुणी कस्मात्सुतौ वृद्धाविमौ कुतः ॥५२॥
त्रयाणां सहचारित्वाद्वैपरीत्यं कुतः स्थितम्।
घटते जरठा माता तरुणौ तनयाविति ॥५३॥

थिईन्। उनको चारै तिर सयौं स्त्रिहरू उनलाई पंखा हम्किरहेका थिए र बारम्बार सम्झाउँथे॥४०॥ टाढै बाट यो सबै चरित देखेर म कौतुहलवश उनी नजिकै गएं। मलाई देखेर ती युवती उभिईन र बड़ो व्याकुल भएर भन्नलागिन्॥४१॥

**युवतीले भनिन्**–हे महात्मा जी! केही क्षण पर्खनुहोस र मेरो चिन्तालाई पनि नष्ट गरिदिनुहोस। हजुरको दर्शन त संसारको सम्पूर्ण पापहरूलाई सर्वथा नष्ट गरिदिनेवाला हो॥४२॥ हजुरको वचनले मेरो दुःखको पनि धेरै शान्ति हुनेछ। मनुष्यको जब ठूलो भाग्य हुन्छ, तब हजुरको दर्शन हुने गर्दछ॥४३॥

**नारदजी भन्नुहुन्छ**–तब मैले त्यस स्त्री संग सोधें–देवि! तिमी को हौ? यी दुबै पुरुष तिम्रो को हुन्? र तिमी नजिकै यी कमलनयनी देवीहरू को हुन्? तिमी मलाई विस्तारले आफ्नो दुःखको कारण भन॥४४॥

**युवतीले भनिन्**–मेरो नाम भक्ति हो, यी ज्ञान र वैराग्य नामक मेरा पुत्र हुन्। समयको फेरले नै यी यस्ता जर्जर हुन पुगेका छन्॥४५॥ यी देवीहरू गंगाजी आदि नदिहरू हुन्। यी सबै मेरो सेवा गर्नको लागि नै आएका छन्। स प्रकार साक्षात् देवीहरूको द्वारा सेवित भएर पनि मलाई सुख–शान्ति छैन्॥४६॥ तपोधन! अब ध्यान दिएर मेरो वृत्तान्त सुन्नुहोस। उसो त मेरो कथा प्रसिद्ध नै छ, फेरि पनि त्यसलाई सुनेर हजुर मलाई शान्ति प्रदान गर्नुहोस॥४७॥ म द्रविड़ देशमा उत्पन्न भए, कर्णाटकमा बढ़ें, कतै–कतै महाराष्ट्रमा सम्मानित भएं किन्तु गुजरातमा मलाई बुढ्यौली ले घेर्‍यो॥४८॥ त्यहाँ घोर कलियुगको प्रभावले पाखण्डिहरूले मलाई अंग–भंग गरिदिए। चिरकालसम्म यो अवस्था रहेकोले म आफ्ना छोराहरूका साथमा दुर्बल र निस्तेज भए॥४९॥ अब जबदेखि म वृन्दावन आएं, तबदेखि पुनः परम सुन्दरी सुरूपवती नवयुवती हुन पुगेको छु॥५०॥ किन्तु सामुन्ने लडेका यी दुबै मेरा छोराहरू गलि–थकि दुःखी भईरहेका छन्। अब म यो स्थान छोड़ेर अन्यत्र जान चाहन्छु॥५१॥ यी दुबै बूढ़ा भएका छन्– यही दुःखले म दुःखी छु। म तरुणी किन र मेरा यी दुबै छोराहरू बूढा किन?॥५२॥ हामी तीनै जना संग–संगै रहनेवाला हौं। फेरी यो विपरीतता किन? हुनु त यो पर्थ्यो कि माता बुढी होओस र पुत्र तरुण॥५३॥

अतः शोचामि चात्मानं विस्मयाविष्टमानसा।
वद योगनिधे धीमन् कारणं चात्र किं भवेत् ॥५४॥

नारद उवाच

ज्ञानेनात्मनि पश्यामि सर्वमेतत्तवानघे।
न विषादस्त्वया कार्यो हरिः शं ते करिष्यति ॥५५॥

सूत उवाच

क्षणमात्रेण तज्ज्ञात्वा वाक्यमूचे मुनीश्वरः ॥५६॥

नारद उवाच

शृणुष्वावहिता बाले युगोऽयं दारुणः कलिः।
तेन लुप्तः सदाचारो योगमार्गस्तपांसि च ॥५७॥
जना अघासुरायन्ते शाठ्यदुष्कर्मकारिणः।
इह सन्तो विषीदन्ति प्रहृष्यन्ति ह्यसाधवः।
धत्ते धैर्यं तु यो धीमान् स धीरः पण्डितोऽथवा ॥५८॥
अस्पृश्यानवलोक्येयं शेषभारकरी धरा।
वर्षे वर्षे क्रमाज्जाता मङ्गलं नापि दृश्यते ॥५९॥
न त्वामपि सुतैः सांकं कोऽपि पश्यति साम्प्रतम्।
उपेक्षितानुरागान्धैर्जर्जरत्वेन संस्थिता ॥६०॥
वृन्दावनस्य संयोगात्पुनस्त्वं तरुणी नवा।
धन्यं वृन्दावनं तेन भक्तिर्नृत्यति यत्र च ॥६१॥
अत्रेमौ ग्राहकाभावान्न जरामपि मुञ्चतः।
किञ्चिदात्मसुखेनेह प्रसुप्तिर्मन्यतेऽनयोः ॥६२॥

भक्तिरुवाच

कथं परीक्षिता राज्ञा स्थापितो ह्यशुचिः कलिः।
प्रवृत्ते तु कलौ सर्वसारः कुत्र गतो महान् ॥६३॥
करुणापरेण हरिणाप्यधर्मः कथमीक्ष्यते।
इमं मे संशयं छिन्धि त्वद्वाचा सुखितास्म्यहम् ॥६४॥

नारद उवाच

यदि पृष्टस्त्वया बाले प्रेमतः श्रवणं कुरु।

यसैले म आश्चर्यचकित चित्तले आफ्नो यस अवस्था माथि शोक गरिरहन्छु। हजुर परम बुद्धिमान् एवं योगनिधि हुनुहुन्छ, यसको कारण के हो, भन्नुहोस? ॥५४॥

**नारदजीले भन्नुभयो**–साध्वि! म आफ्नो हृदयमा ज्ञान ष्टिद्वारा तिम्रो सम्पूर्ण दु:खको कारण हेर्दछु, तिमीले विषाद गर्नु हुँदैन। श्रीहरि तिम्रो कल्याण गर्नुहुनेछ॥५५॥

सूतजी भन्नुहुन्छ–मुनिवर नारदजीले एक क्षणमा नै त्यसको कारण जानेर भन्नुभयो॥५६॥

**नारदजीले भन्नुभयो**–देवि! सावधान भएर सुन। यो दारुण कलियुग हो। यसैले यस समय सदाचार, योगमार्ग र तप आदि सबै लुप्त भएका छन्॥ ५७॥ मान्छेहरू शठता र दुष्कर्ममा लागेर अघासुर बनिरहेका छन्। संसारमा जहाँ हेर्‍यो, त्यहीं सत्पुरुष दु:खले म्लान छन् र दुष्ट सुखी भईरहेका छन्। यस समय जुन बुद्धिमान् पुरुषमा धैर्य रहन्छ, त्यही नै ठूलो ज्ञानी या पण्डित हो॥५८॥ पृथ्वी क्रमशः प्रतिवर्ष शेषजीको लागि भाररूप हुँदै गईरहेकी छिन्। अब यो छुनयोग्य त के हेर्न योग्य पनि रहेकी छैनन् र न यिनमा कतै मंगल नै देखिन्छ॥५९॥ अब कसैलाई पुत्रहरूका साथ तिम्रो दर्शन पनि हुँदैन। विषयानुरागको कारण अंधा बनेका जीवहरूबाट उपेक्षित भएर तिमी जर्जर भईरहेकी थियौ॥६०॥ वृन्दावनको संयोगले तिमी फेरि नवीन तरुणी भएकी छौ। अतः यो वृन्दावनधाम धन्य छ, जहाँ भक्ति सर्वत्र नृत्य गरिरहेकी छिन्॥६१॥ परंतु तिम्रो यी दुबै पुत्रहरू को यहाँ कोही ग्राहक छैन, यसैले यिनीहरूको वृद्धावस्था छूटिरहेको छैन। यहाँ यिनीहरूलाई केही आत्मसुख (भगवत्स्पर्शजनित आनन्द) को प्राप्ति भएको कारण यी सुतेको जस्तो लाग्दछन्॥६२॥

**भक्तिले भनिन्**–राजा परीक्षितले यस पापी कलियुगलाई नै किन रहन दिए? यो आउने बित्तिकै सम्पूर्ण वस्तुहरूको सार न जाने कहाँ गयो? ॥६३॥ करुणामय श्रीहरि पनि यो अधर्म कसरी हेर्न सक्नुहुन्छ? मुने! मेरो यो संदेह नाश गर्नुहोस, हजुरको वचनले मलाई धेरै शान्ति मिलेको छ॥ ६४॥

**नारदजीले भन्नुभयो**–बाले! यदि तिमीले सोधेकी नै

**सर्वं वक्ष्यामि ते भद्रे कश्मलं ते गमिष्यति ॥६५॥**

**यदा मुकुन्दो भगवान् क्ष्मां त्यक्त्वा स्वपदं गतः।**

**तद्दिनात्कलिरायातः सर्वसाधनबाधकः ॥६६॥**

**दृष्टो दिग्विजये राज्ञा दीनवच्छरणं गतः।**

**न मया मारणीयोऽयं सारङ्ग इव सारभुक् ॥६७॥**

**यत्फलं नास्ति तपसा न योगेन समाधिना।**

**तत्फलं लभते सम्यक्कलौ केशवकीर्तनात् ॥६८॥**

**एकाकारं कलिं दृष्ट्वा सारवत्सारनीरसम्।**

**विष्णुरातः स्थापितवान् कलिजानां सुखाय च ॥६९॥**

**कुकर्माचरणात्सारः सर्वतो निर्गतोऽधुना।**

**पदार्थाः संस्थिता भूमौ बीजहीनास्तुषा यथा ॥७०॥**

**विप्रैर्भागवती वार्ता गेहे गेहे जने जने ।**

**कारिता कणलोभेन कथासारस्ततो गतः ॥७१॥**

**अत्युग्रभूरिकर्माणो नास्तिका रौरवा जनाः।**

**तेऽपि तिष्ठन्ति तीर्थेषु तीर्थसारस्ततो गतः ॥७२॥**

**कामक्रोधमहालोभतृष्णाव्याकुलचेतसः।**

**तेऽपि तिष्ठन्ति तपसि तपः सारस्ततो गतः ॥७३॥**

**मनसश्चाजयाल्लोभाद्दम्भात्पाखण्डसंश्रयात्।**

**शास्त्रानभ्यसनाच्चैव ध्यानयोगफलं गतम् ॥७४॥**

**पण्डितास्तु कलत्रेण रमन्ते महिषा इव।**

**पुत्रस्योत्पादने दक्ष अदक्षा मुक्ति साधने ॥७५॥**

**न हि वैष्णवता कुत्र सम्प्रदायपुरःसरा।**

**एवं प्रलयतां प्राप्तो वस्तुसारः स्थले स्थले ॥७६॥**

**अयं तु युगधर्मो हि वर्तते कस्य दूषणम्।**

**अतस्तु पुण्डरीकाक्षः सहते निकटे स्थितः ॥७७॥**

हौ भने, प्रेमले सुन, कल्याणी! म तिमीलाई त्यो सबै भन्नेछु र तिम्रो दुःख पनि नाश हुनेछ ॥६५॥ जुन दिन भगवान् श्रीकृष्ण यस भूलोकलाई छोडेर आफ्नो परमधाम जानुभयो, त्यसै दिन देखि यहाँ सम्पूर्ण साधनहरूमा बाधा गर्नेवाला कलियुग आईपुग्यो ॥६६॥ दिग्विजयको समय राजा परीक्षित्को दृष्टि परेपछि कलियुग दीनको समान उनको शरणमा आयो। भ्रमरको समान सारग्राही राजाले यो निश्चय गरेर कि यसको वध मैले गर्नुहुँदैन ॥६७॥ किनकी जुन फल तपस्या, योग एवं समाधिद्वारा पनि मिल्दैन, कलियुगमा त्यही फल श्रीहरिकीर्तनले नै भलीभाँति मिल्दछ ॥६८॥ यस प्रकार सारहीन भएर पनि त्यसलाई एकमात्र दृष्टिले सारयुक्त देखेर उनले कलियुगमा उत्पन्न हुनेवाला जीवहरूको सुखको लागि नै यसलाई रहन दिएको थिए ॥६९॥ यस समय मान्छेहरू कुकर्ममा प्रवृत्त भएको कारण सबै वस्तुहरूको सार निस्किएर गयो र पृथ्वीको सम्पूर्ण पदार्थ बीजहीन भूसाको समान भएका छन् ॥७०॥ ब्राह्मण केवल अन्न-धनादिको लोभवश घर-घरमा एवं जन-जनमा भागवतको कथा सुनाउन थालेका छन्, यसैले कथाको सार पनि नाशियो ॥७१॥ तीर्थहरूमा नाना प्रकारका अत्यन्त घोर कर्म गर्नेवाला, नास्तिक र नारकी पुरुष पनि बस्न थालेका छन् यसैले तीर्थहरूको पनि सार गयो ॥७२॥ जसको चित्त निरन्तर काम, क्रोध, महान् लोभ र तृष्णाले तप्त रहन्छ, ती पनि तपस्याको ढोंग गर्न लागेका छन्, यसैले तपस्याको सार पनि नाशिएर गयो ॥७३॥ मनमाथि काबू नभएको कारण तथा लोभ, दम्भ र पाखण्डको आश्रय लिएको कारण एवं शास्त्रको अभ्यास नगर्नाले ध्यानयोगको फल पनि मेटियो ॥७४॥ पण्डितहरूको त यो दशा छ कि ती केवल आफ्ना स्त्रिहरूका साथमा जनावरको जस्तो रमण गर्दछन् उनीहरूमा सन्तान पैदा गर्ने कुशलता पाईन्छ, मुक्तिसाधनमा ती सर्वथा अकुशल छन् ॥७५॥ सम्प्रदायानुसार प्राप्त भएको वैष्णवता पनि कतै देखिंदैन। यस प्रकार ठाउँ-ठाउँमा सम्पूर्ण वस्तुहरूको सार लुप्त भएर गयो ॥७६॥ यो त यस युगको स्वभाव नै हो यसमा कसैको दोष छैन। यसैले पुण्डरीकाक्ष भगवान् धेरै

सूत उवाच

**इति तद्वचनं श्रुत्वा विस्मयं परमं गता।**
**भक्तिरूचे वचो भूयः श्रूयतां तच्च शौनक॥७८॥**

भक्तिरुवाच

**सुरर्षे त्वं हि धन्योऽसि मद्भाग्येन समागतः।**
**साधूनां दर्शनं लोके सर्वसिद्धिकरं परम्॥७९॥**

**जयति जगति माया यस्य कायाधवस्ते**
**वचनरचनमेकं केवलं चाकलय्य।**
**ध्रुवपदमपि यातो यतकृपातो ध्रुवोऽयं**
**सकलकुशलपात्रं ब्रह्मपुत्रं नतास्मि॥८०॥**

नजिक भएर पनि यो सबै सहिरहनु भएको छ॥७७॥ **सूतजी भन्नुहुन्छ**– शौनकजी! यस प्रकार देवर्षि नारदको वचन सुनेर भक्तिलाई बड़ो आश्चर्य भयो र उनले जो कुरा भनिन्, त्यो सुन्नुहोस॥७८॥ **भक्तिले भनिन्**–देवर्षे! हजुर धन्य हुनुहुन्छ! मेरो ठूलो सौभाग्य थियो, जो तपाइको समागम भयो। संसारमा साधुहरूको दर्शन नै समस्त सिद्धिहरूको परम कारण हो॥७९॥ तपाईको केवल एक पल्टको उपदेश धारण गरेर कयाधूकुमार प्रह्लादले मायामाथि विजय प्राप्त गरेका थिए। ध्रुवले पनि हजुरको कृपाले नै ध्रुवपद प्राप्त गरेका थिए। हजुर सर्वमंगलमय र साक्षात् श्रीब्रह्माजी को पुत्र हुनुहुन्छ, म हजुरलाई नमस्कार गर्दछु॥ ८०॥

**इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमहात्म्ये भक्तिनारदसमागमो नाम प्रथमोऽध्यायः॥१॥**

–★–

# अथ द्वितीयोऽध्याय

**भक्तिको दुःख हटाउनको लागि नारदजीको उद्योग**

नारद उवाच

**वृथा खेदयसे बाले अहो चिन्तातुरा कथम्।**
**श्रीकृष्णचरणाम्भोजं स्मर दुःख गमिष्यति॥१॥**

**द्रौपदी च परित्राताता येन कौरवकश्मलात्।**
**पालिता गोपसुन्दर्यः स कृष्ण क्वापि नो गतः॥२॥**

**त्वं तु भक्तिः प्रिया तस्य सततं प्राणतोऽधिका।**
**त्वयाऽऽहुतस्तु भगवान् याति नीचगृहेष्वपि॥ ३॥**

**सत्यादित्रियुगे बोधवैराग्यौ मुक्तिसाधकौ।**
**कलौ तु केवला भक्तिर्ब्रह्मसायुज्यकारिणी॥ ४॥**

**इति निश्चित्य चिद्रूपः सद्रुपां त्वां ससर्ज ह।**
**परमानन्दचिन्मूर्तिः सुन्दरीं कृष्णवल्लभाम्॥५॥**

**नारदजीले भन्नुभयो**– हे बालिका! तिमी व्यर्थै आफुलाई किन दुःखित तुल्याईरहेकी छौ? अरे! तिमी यति चिन्तातुर किन छौ? भगवान् श्रीकृष्णको चरणकमलको चिन्तन गर, उहाँको कृपाले तिम्रो सारा दुःख भाग्नेछ॥१॥ जसले कौरवहरूको अत्याचारबाट द्रौपदीको रक्षा गर्नुभएको थियो र गोपसुन्दरीहरूलाई सनाथ गर्नुभएको थियो, ती श्रीकृष्ण कतै जानुभएको नै छैनन् नी ॥२॥ फेरि तिमी त भक्ति हौ र सदा उहाँलाई प्राणभन्दा पनि प्यारी छौ; तिमीले बोलाए पछि त भगवान नीचहरूको घरमा पनि जानुहुन्छ॥३॥ सत्य, त्रेता र द्वापर– यी तीनै युगहरूमा ज्ञान र वैराग्य मुक्तिका साधन थिए तर कलियुगमा त केवल भक्ति नै ब्रह्मसायुज्य (मोक्ष) प्रदान गर्दछ॥४॥ यो सोचेर नै परमानन्दचिन्मूर्ति ज्ञानस्वरूप श्रीहरिले आफ्नो सत्यस्वरूपद्वारा तिमीलाई रच्नुभएको हो; तिमी साक्षात् श्रीकृष्णको प्रिया र परम सुन्दरी हौ॥५॥

**बद्ध्वाञ्जलिं त्वया पृष्टं किं करोमीति चैकदा।**
**त्वां तदाऽऽज्ञापयत्कृष्णो मद्भक्तान् पोषयेति च ॥६॥**
**अङ्गीकृतं त्वाया तद्वै प्रसन्नोऽभूद्धरिस्तदा।**
**मुक्तिं दासीं ददौ तुभ्यं ज्ञानवैराग्यकाविमौ ॥७॥**
**पोषणं स्वेन रूपेण वैकुण्ठे त्वं करोषि च।**
**भूमौ भक्तविपोषाय छायारूपं त्वया कृतम् ॥८॥**
**मुक्तिं ज्ञानं विरक्तिं च सह कृत्वा गता भुवि।**
**कृतादिद्वापरस्यान्तं महानन्देन संस्थिता ॥९॥**
**कलौ मुक्तिः क्षयं प्राप्ता पाखण्डामयपीडिता।**
**त्वदाज्ञया गता शीघ्रं वैकुण्ठं पुनरेव सा ॥१०॥**
**स्मृता त्वयापि चात्रैव मुक्तिरायाति याति च।**
**पुत्रीकृत्य त्वयेमौ च पार्श्वे स्वस्यैव रक्षितौ ॥११॥**
**उपेक्षातः कलौ मन्दौ वृद्धौ जातौ सुतौ तव।**
**तथापि चिन्तां मुञ्च त्वमुपायं चिन्तयाम्यहम् ॥१२॥**
**कलिना सदृशः कोऽपि युगो नास्ति वरानने।**
**तस्मिंस्त्वां स्थापयिष्यामि गेहे गेहे जने जने ॥१३॥**
**अन्यधर्मांस्तिरस्कृत्य पुरस्कृत्य महोत्सवान्।**
**तदा नाहं हरेर्दासो लोके त्वां न प्रवर्तये ॥१४॥**
**त्वदन्विताश्च ये जीवा भविष्यन्ति कलाविह।**
**पापिनोऽपि गमिष्यन्ति निर्भयं कृष्णमन्दिरम् ॥१५॥**
**येषां चित्ते वसेद्भक्तिः सर्वदा प्रेमरूपिणी।**
**न ते पश्यन्ति कीनाशं स्वप्नेऽप्यमलमूर्त्तय ॥१६॥**
**न प्रेतो वा पिशाचो वा राक्षसो वासुरोऽपि वा।**
**भक्तियुक्तमनस्कानां स्पर्शने न प्रभुर्भवेत् ॥१७॥**
**न तपोभिर्न वेदैश्च न ज्ञानेनापि कर्मणा।**
**हरिर्हि साध्यते भक्त्या प्रमाणं तत्र गोपिकाः ॥१८॥**

एकपल्ट जब तिमीले हात जोडेर सोध्यौ कि 'म अब के गरौं ?' तब भगवान्ले तिमीलाई यही आज्ञा दिनुभएको थियो कि 'मेरो भक्तहरूको पोषण गर' ॥६॥ तिमीले भगवान्को त्यो आज्ञा स्वीकार गर्‍यौ, यसैले श्रीहरि तिमीसँग प्रसन्न हुनुभयो र तिम्रो सेवाको लागि मुक्तिलाई दासीको रूपमा तिमीलाई दिनुभयो र यी ज्ञान–वैराग्यलाई तिम्रो पुत्रको रूपमा ॥७॥ तिमी आफ्नो साक्षात् स्वरूपले वैकुण्ठधाममा नै भक्तहरूको पोषण गर्दछौ, भूलोकमा त तिमीले उनीहरूको पुष्टिको लागि केवल छायाँरूप धारण गरिराखेकी छौ ॥८॥ उतिबेला तिमी मुक्ति, ज्ञान र वैराग्यलाई साथमा लिएर पृथ्वीतलमा आयौ र सत्ययुग देखि द्वापरसम्म बड़ो आनन्दले बस्यौ ॥९॥ कलियुगमा तिम्रो दासी मुक्ति पाखण्डरूप रोगले पीड़ित भएर क्षीण हुन लागेकी थिईन, यसैले तिम्रो आज्ञाले मुक्ति तुरुन्तै वैकुण्ठलोकमा गईन् ॥१०॥ यस लोकमा पनि तिमीले स्मरण गर्ने बित्तिकै उनी आउँछिन् र पुनः जान्छिन पनि; किन्तु यी ज्ञान–वैराग्यलाई तिमीले पुत्र मानेर आफुसँगै राखेकी छौ ॥११॥ फेरि पनि कलियुगमा यिनीहरूको उपेक्षाको कारण तिम्रा यी छोरा उत्साहहीन र वृद्ध भएका छन्, तर तिमी चिन्ता नगर, म यिनीहरूको नवजीवनको उपाय सोच्दछु ॥१२॥ सुमुखि ! कलिको समान कुनै पनि युग छैन, यस युगमा म तिमीलाई घर–घरमा प्रत्येक मनुष्यको हृदयमा स्थापित गरिदिनेछु ॥१३॥ हेर, अन्य सबै धर्महरूलाई पछि पारेर र भक्तिविषयक महोत्सवहरूलाई अघि लगाएर यदि मैले लोकमा तिम्रो प्रचार गरिन भने म श्रीहरिको दास होईन ॥१४॥ यस कलियुगमा जो जीव तिमीले युक्त हुनेछन्, ती पापी भएपनि निडर भई भगवान् श्रीकृष्णको अभय धाममा प्राप्त हुनेछन् ॥१५॥ जसको हृदयमा निरन्तर प्रेमरूपिणी भक्तिको निवास हुन्छ, ती शुद्धान्तःकरण मनुष्यले स्वप्नमा पनि यमराजलाई हेर्नुपर्दैन ॥१६॥ जसको हृदयमा भक्ति महारानीको निवास छ, उनीहरूलाई प्रेत, पिशाच, राक्षस या दैत्य आदि छुन पनि सक्दैनन् ॥१७॥ भगवान्लाई तप, वेदाध्ययन, ज्ञान र कर्म आदि कुनैपनि साधनले वशमा गर्न सकिंदैन उहाँ त केवल भक्तिले नै वशीभूत बन्नुहुन्छ। यसमा श्रीगोपीजन प्रमाण छन् ॥१८॥

**नृणां जन्मसहस्रेण भक्तौ प्रीतिर्हि जायते।**
**कलौ भक्तिः कलौभक्तिर्भक्त्या कृष्णः पुरः स्थित॥१९॥**
**भक्तिद्रोहकरा ये च ते सीदन्ति जगत्त्रये।**
**दुर्वासा दुःखमापन्नः पुरा भक्तविनिन्दकः॥२०॥**
**अलं व्रतैरलं तीर्थैरलं योगैरलं मखैः।**
**अलं ज्ञानकथालापैर्भक्तिरेकैव मुक्तिदा॥२१॥**

**सूत उवाच**

**इति नारदनिर्णीतं स्वमाहात्म्यं निशम्य सा।**
**सर्वाङ्गपुष्टिसंयुक्ता नारदं वाक्यमब्रवीत्॥२२॥**

**भक्तिरूवाच**

**अहो नारद धन्योऽसि प्रीतिस्ते मयि निश्चला।**
**न कदाचिद्विमुञ्चामि चित्ते स्थास्यामि सर्वदा॥२३॥**
**कृपालुना त्वया साधो मद्बाधा ध्वंसिता क्षणात्।**
**पुत्रयोश्चेतना नास्ति ततो बोधय बोधय॥२४॥**

**सूत उवाच**

**तस्या वचः समाकर्ण्य कारुण्यं नारदो गतः।**
**तयोर्बोधनमारेभे कराग्रेण विमर्दयन्॥२५॥**
**मुखं संयोज्य कर्णान्ते शब्दमुच्चैः समुच्चरन्।**
**ज्ञानं प्रबुध्यतां शीघ्रं रे वैराग्य प्रबुध्यताम्॥२६॥**
**वेदवेदान्तघोषैश्च गीतापाठैर्मुहुर्मुहुः।**
**बोध्यमानौ तदा तेन कथंचिच्चोत्थितौ बलात्॥२७॥**
**नेत्रैरनवलोकन्तौ जृम्भन्तौ सालसावुभौ।**
**बकबत्पलितौ प्रायः शुष्काष्ठसमाङ्गकौ॥२८॥**
**क्षुत्क्षामौ तौ निरीक्ष्यैव पुनः स्वापपरायणौ।**
**ऋषिश्चिन्तापरो जातः किं विधेयं मयेति च॥२९॥**
**अहो निद्रा कथं याति वृद्धत्वं च महत्तरम्।**

मनुष्यको हजारौं जन्मको पुण्य–प्रतापले भक्तिमा अनुराग हुन्छ। कलियुगमा त केवल भक्ति, केवल भक्ति नै सार छ। भक्तिले त साक्षात् श्रीकृष्णचन्द्र सामुन्ने दर्शन दिनुहुन्छ॥१९॥ जो व्यक्ति भक्तिसँग द्रोह गर्दछन्, ती तीनै लोकमा दुःख–नै–दुःख पाउँदछन। प्राचीनकालमा भक्तको तिरस्कार गर्ने दुर्वासा ऋषिलाई ठूलो कष्ट बेहोर्नु परेको थियो॥२०॥ बस, बस–व्रत, तीर्थ, योग, यज्ञ र ज्ञान–चर्चा आदि धेरै साधनहरूको कुनै आवश्यकता छैन; एकमात्र भक्ति नै मुक्ति प्रदाता हो॥२१॥

**सूतजी भन्नुहुन्छ**–यस प्रकार नारदजीद्वारा निर्णय गरिएको आफ्नो माहात्म्यलाई सुनेर भक्तिको सम्पूर्ण अंग पुष्ट भयो र उनी नारदजी सँग भन्न थालिन्॥२२॥

**भक्तिले भनिन्**–नारदजी! तपाईं धन्य हुनुहुन्छ। तपाईंको ममा निश्चल प्रीति छ। म सदा तपाईंको हृदयमा बस्नेछु। कहिल्यै तपाईंलाई छोडेर जाँदिन॥२३॥ हे साधो! तपाईं धेरै कृपालु हुनुहुन्छ। तपाईंले एकैछिनमा मेरो सारा दुःख नष्ट गरिदिनु भयो। तर अहिले पनि मेरा छोराहरूमा चेतना आएको छैन; तपाईं यिनीहरूलाई पनि शीघ्र सचेत गराईदिनुहोस जगाईदिनुहोस॥२४॥

**सूतजी भन्नुहुन्छ**–भक्तिका यी कुरा सुनेर नारदजीलाई करुणा आयो र तिनीहरूलाई हातले सुम्सुम्याउँदै उठाउन लाग्नुभयो॥२५॥ (त्यति गर्दा पनि नउठे पछि) उनीहरूको कानमै मुख लागाएर जोरले कराउनु भयो, 'ए ज्ञान! छिटो उठ; ए वैराग्य! छिटो उठ' ॥२६॥ फेरि नारदजीले वेदध्वनि, वेदान्तघोष र बारम्बार गीतापाठ गरेर उनीहरूलाई जगाउनु भयो यसले ती जसो तसो धेरै बल लगाएर उठे॥२७॥ किन्तु आलस्यको कारण ती दुबै हाई–हाई मात्रै गरिरहे, आँखा खोलेर हेर्न पनि सकेनन्। उनीहरूको कपाल बकुल्लाको जस्तो सेता भईसकेका थिए, उनीहरूको अंग पनि प्रायः सुकेको काठ जस्तो भएको थियो॥२८॥ यस प्रकार भोक–प्यासले व्याकुल भएर अत्यन्त दुर्बल भएका उनीहरूलाई फेरि सुत्नलागेको देखेर नारदजीलाई ठूलो चिन्ता भयो र उहाँ सोच्न लाग्नुभयो 'अब मैले के गर्नुपर्ला'? ॥२९॥ यिनीहरूको यो निद्रा र यो भन्दा पनि ठूलो यिनीहरूको वृद्धावस्था कसरी हट्ला?'

**चिन्तयन्निति गोविन्दं स्मारयामास भार्गव॥३०॥**
**व्योमवाणी तदैवाभून्मा ऋषे खिद्यतामिति।**
**उद्यमः सफलस्तेऽयं भविष्यति न संशयः॥३१॥**
**एतदर्थं तु सत्कर्म सुरर्षे त्वं समाचर।**
**तत्ते कर्माभिधास्यन्ति साधवः साधुभूषणाः॥३२॥**
**सत्कर्मणि कृते तस्मिन् सनिद्रा वृद्धतानयोः।**
**गमिष्यति क्षणाद्भक्तिः सर्वतः प्रसरिष्यति॥३३॥**
**इत्याकाशवचः स्पष्टं तत्सर्वैरपि विश्रुतम्।**
**नारदो विस्मयं लेभे नेदं ज्ञातमिति ब्रुवन॥३४॥**

**नारद उवाच**

**अनयाऽऽकाशवाण्यापि गोप्यत्वेन निरूपितम्।**
**किं वा तत्साधनं कार्यं येन कार्यं भवेत्तयोः॥३५॥**
**क्व भविष्यन्ति सन्तस्ते कथं दास्यन्ति साधनम्।**
**मयात्र किं कर्तव्यं यदुक्तं व्योमभाषया॥३६॥**

**सूत उवाच**

**तत्र द्वावपि संस्थाप्य निर्गतो नारद मुनिः।**
**तीर्थं तीर्थं विनिष्क्रम्य पृच्छन्मार्गे मुनिश्वरान्॥३७॥**
**वृत्तान्तः श्रूयते सर्वै किंचिन्निश्चित्य नोच्यते।**
**असाध्यं केचन प्रोचुर्दुर्ज्ञेयमिति चापरे।**
**मूकीभूतास्तथान्ये तु कियन्तस्तु पलायिताः॥३८॥**
**हाहाकारो महानासीत्त्रैलोक्ये विस्मयाविहः।**
**वेदवेदान्तघोषैश्च गीतापाठैर्विबोधितम्॥३९॥**
**भक्तिज्ञानविरागाणां नोदतिष्ठत्त्रिकं यदा।**
**उपायो नापरोऽस्तीति कर्णे कर्णेऽजपञ्जनाः॥४०॥**
**योगिना नारदेनापि स्वयं न ज्ञायते तु यत्।**
**तत्कथं शक्यते वक्तुमितरैरिह मानुषैः॥४१॥**
**एवमृषिगणैः पृष्टैर्निर्णीयोक्तं दुरासदम्॥४२॥**

शौनकजी! यस प्रकार चिन्ता गर्दै उहाँ भगवान्‌को स्मरण गर्न लाग्नुभयो॥३०॥ त्यसै समय यो आकाशवाणी भयो कि ‘हे मुने! विस्मात् नगर, तिम्रो यो उद्योग निःसंदेह सफल हुनेछ॥३१॥ देवर्षे! यसको लागि तिमी एउटा सत्कर्म गर, त्यो कर्म तिमीलाई सन्तशिरामणि महानुभाव बताउनु हुनेछ॥३२॥ त्यस सत्कर्मको अनुष्ठान गर्ने बित्तिकै क्षणभरमा नै यिनीहरूको निद्रा र वृद्धावस्था हट्नेछ र सर्वत्र भक्तिको प्रसार हुनेछ’॥३३॥ यो आकाशवाणी त्यहाँ भएका सबैले स्पष्टसँग सुने। यसले नारदजीलाई अझै विस्मय भयो र उहाँ भन्नलाग्नु भयो, ‘मैले त यसको केही कुरा नै बुझिन’॥३४॥

**नारदजीले भन्नुभयो**–यस आकाशवाणीले पनि गुप्तरूपमा भनेको छ। यो भनेन कि त्यो कुन साधन गर्नुपर्ने हो, जसले यिनीहरूको कार्य सिद्ध हुन्छ॥३५॥ न जाने ती सन्त कहाँ भेटिन्छन र कसरी त्यो साधनलाई बताउने छन्? अब आकाशवाणीले जो भनेको छ, त्यसको अनुसार मैले के गर्नु पर्छ?॥३६॥

**सूतजी भन्नुहुन्छ**–शौनकजी! तब ज्ञान–वैराग्य दुबैलाई त्यहीं छोडेर नारदमुनि त्यहाँबाट हिंड्नु भयो र प्रत्येक तीर्थ–तीर्थमा गएर तथा बाटोमा भेटिने मुनीश्वरहरूलाई त्यो साधन सोध्न लाग्नुभयो॥३७॥ नारदजीको कुरा त सबैले सुन्दथे तर त्यसको विषयमा कुनै निश्चित उत्तर दिन सकेनन्। कसैले त्यसलाई असाध्य भने त कसैले ‘यसको सही–सही कुरा पत्ता लगाउन नै कठिन छ।’ कोही सुनेरै चुप लाग्दथे त कोही–कोही आफ्नो अवज्ञा हुने भयले कुरालाई टाल–टूल गरेर अन्तै लस्किए॥३८॥ त्रिलोकीमा महान् आश्चर्यजनक हाहाकार मच्चियो। मान्छेहरू आपसमा कानेखुसी गर्न लागे कि ‘अरे भाई! जब वेदध्वनि, वेदान्तघोष र बारम्बार गीतापाठ सुनाउँदा पनि भक्ति, ज्ञान र वैराग्य यी तीनैलाई जगाउन सकिएन भने, तब अरू कुनै उपाय नै छैन॥३९–४०॥ स्वयं योगिराज नारदलाई पनि जुन कुराको ज्ञान छैन, भने त्यसलाई संसारी मनुष्य कसरी बताउन सक्दछन्?॥४१॥ यस प्रकार जुन–जुन ऋषिहरूलाई यसको बारेमा सोधियो, उनीहरूले निर्णय गरेर यही भने कि यो कुरा दुःसाध्य नै छ॥४२॥

**ततश्चिन्तातुरः सोऽथ बदरीवनमागतः।**

**तपश्चरामि चात्रेति तदर्थं कृतनिश्चयः॥४३॥**

**तावद्ददर्श पुरतः सनकादीन्मुनीश्वरान्।**

**कोटिसूर्यसमाभासानुवाच मुनिसत्तमः॥४४॥**

**नारद उवाच**

**इदानीं भूरिभाग्येन भवद्भिः संगमोऽभवत्।**

**कुमारा ब्रुवतां शीघ्रं कृपां कृत्वा ममोपरि॥४५॥**

**भवन्तो योगिनः सर्वे बुद्धिमन्तो बहुश्रुताः।**

**पञ्चहायनसंयुक्ताः पूर्वेषामपि पूर्वजाः॥४६॥**

**सदा वैकुण्ठनिलया हरिकीर्तनतत्पराः।**

**लीलामृतरसोन्मत्ताः कथा मात्रैकजीविनः॥४७॥**

**हरिः शरणमेवं हि नित्यं येषां मुखे वचः।**

**अतः काल समादिष्टा जरा युष्मान्न बाधते॥४८॥**

**येषां भ्रूभङ्गमात्रेण द्वारपालौ हरेः पुरा।**

**भूमौ निपतितौ सद्यो यत्कृपातः पुरं ययौ॥४९॥**

**अहो भाग्यस्य योगेन दर्शनं भवतामिह।**

**अनुग्रहस्तु कर्तव्यो मयि दीने दयापरैः॥५०॥**

**अशरीरगिरोक्तं यत्तत्किं साधनमुच्यताम्।**

**अनुष्ठेयं कथं तावत्प्रब्रुवन्तु सविस्तरम्॥५१॥**

**भक्तिज्ञानविरागाणां सुखमुत्पद्यते कथम्।**

**स्थापनं सर्ववर्णेषु प्रेमपूर्वं प्रयत्नतः॥५२॥**

**कुमारा ऊचुः**

**मा चिन्तां कुरु देवर्षे हर्षं चित्ते समावह।**

**उपायः सुखसाध्योऽत्र वर्तते पूर्व एव हि॥५३॥**

तब नारदजी अत्यन्त चिन्तातुर हुनुभयो र बदरीवनमा आउनुभयो। ज्ञान–वैराग्यलाई जगाउनको लागि त्यहाँ बसेर यही निश्चय गर्नुभयो कि 'म तप गर्नेछु'॥४३॥ यसै समयमा उहाँलाई आफ्नो सामुन्ने करोडौं सूर्यको समान तेजस्वी सनकादि मुनिश्वरको दर्शन भयो। उहाँहरूलाई देखेर ती मुनिश्रेष्ठ भन्न लाग्नुभयो ॥४४॥

**नारदजीले भन्नुभयो**– हे महात्मागण! यस समय ठूलो सौभाग्यले मेरो हजुरहरू सँग भेट भएको छ, हजुरहरू ममाथि कृपा गरेर शीघ्र त्यो साधन बताउनु होस॥४५॥ हजुरहरू ठूला योगी, बुद्धिमान् र विद्वान् हुनुहुन्छ। देखनमा त हजुरहरूलाई पाँच–पाँच वर्षका बालक–जस्तो देखिन्छ, तर हुनुहुन्छ पूर्वजहरूका पनि पूर्वज॥४६॥ हजुरहरू सदा वैकुण्ठधाममा निवास गर्नुहुन्छ, निरन्तर हरिकीर्तनमा तत्पर रहनुहुन्छ, भगवल्लीलामृतको रसास्वादन गरेर सदा त्यसैमा लीन रहनुहुन्छ र एकमात्र भगवत्कथा नै हजुरहरूको जीवनको आधार हो॥४७॥ 'हरिःशरणम्' (भगवान् नै हाम्रा रक्षक हुन्) यो वाक्य (मन्त्र) सर्वदा हजुरहरूको मुखमै झुण्डिएको हुन्छ यसैले कालप्रेरित वृद्धावस्था पनि हजुरहरूलाई बाधा दिन सक्दैन॥४८॥ पूर्वकालमा हजुरहरूको भ्रूभंग मात्रले भगवान् विष्णुका द्वारपाल जय र विजय तुरंत पृथ्वीमा खसेका थिए र फेरि हजुरहरूकै कृपाले उनीहरू पुनः वैकुण्ठलोक पुगेका थिए॥४९॥ धन्य छ, यस समय हजुरहरूको दर्शन ठूलो सौभाग्यले नै भएको छ। म अत्यन्त दीन छु र हजुरहरू स्वभावैले दयालु हुनुहुन्छ; यसैले ममाथि हजुरहरूले अवश्य कृपा गनुपर्दछ ॥५०॥ हे मुनिश्वर! आकाशवाणीले जुन विषयको बारेमा भनेको छ, त्यो कुन साधन हो र मैले कसरी त्यसको अनुष्ठान गर्नुपर्दछ। हजुर यसको विस्तारपूर्वक वर्णन गर्नुहोस॥५१॥ भक्ति, ज्ञान र वैराग्यलाई कसरी सुख मिल्न सक्दछ? र कसरी यिनीहरूलाई प्रेमपूर्वक सबै वर्गहरूमा प्रतिष्ठा गर्न सकिन्छ? ॥५२॥

**सनकादिले भन्नुभयो**–देवर्षे! तपाईं चिन्ता नगर्नुहोस, मनै देखि प्रसन्न हुनुहोस; उनीहरूको उद्धारको एउटा सरल उपाय पहिले देखि नै छ॥५३॥

**अहो नारद धन्योऽसि विरक्तानां शिरोमणिः।**
**सदा श्रीकृष्णदासानामग्रणीर्योगभास्करः॥५४॥**
**त्वयि चित्रं न मन्तव्यं भक्त्यर्थमनुवर्तिनि।**
**घटते कृष्णदासस्य भक्तेः संस्थापना सदा॥५५॥**
**ऋषिभिर्बहवो लोके पन्थानः प्रकटीकृताः।**
**श्रमसाध्याश्च ते सर्वे प्रायः स्वर्गफलप्रदाः॥५६॥**
**वैकुण्ठसाधकः पन्थाः स तु गोप्यो हि वर्तते।**
**तस्योपदेष्टा पुरुषः प्रायो भाग्येन लभ्यते॥५७॥**
**सत्कर्म तव निर्दिष्टं व्योमवाचा तु यत्पुरा।**
**तदुच्यते शृणुष्वाद्य स्थिरचित्तः प्रसन्नधीः॥५८॥**
**द्रव्ययज्ञास्तपोयज्ञा योगयज्ञास्तथापरे।**
**स्वाध्यायज्ञानयज्ञाश्च ते तु कर्मविसूचकाः॥५९॥**
**सत्कर्मसूचको नूनं ज्ञानयज्ञः स्मृतो बुधैः।**
**श्रीमद्भागवतालापः स तु ज्ञान शुकादिभिः॥६०॥**
**भक्तिज्ञानविरागाणां तद्घोषेण बलं महत्।**
**व्रजिष्यति द्वयोः कष्टं सुखं भक्तेर्भविष्यति॥६१॥**
**प्रलयं हि गमिष्यन्ति श्रीमद्भागवतध्वनेः।**
**कलेर्दोषा इमे सर्वे सिंहशब्दाद् वृका इव॥६२॥**
**ज्ञानवैराग्यसंयुक्ता भक्तिः प्रेमरसावहा।**
**प्रतिगेहं प्रतिजनं ततः क्रीडां करिष्यति॥६३॥**

**नारद उवाच**

**वेदवेदान्तघोषैश्च गीतापाठैः प्रबोधितम्।**
**भक्तिज्ञानविरागाणां नोदतिष्ठत्त्रिकं यदा॥६४॥**
**श्रीमद्भागवतालापात्तत्कथं बोधमेष्यति।**
**तत्कथासु तु वेदार्थः श्लोके श्लोके पदे पदे॥६५॥**
**छिन्दन्तु संशयं ह्येनं भवन्तोऽमोघदर्शनाः।**
**विलम्बो नात्र कर्तव्यः शरणागतवत्सलाः॥६६॥**

नारदजी! तपाईं धन्य हुनुहुन्छ। तपाईं विरक्तहरूको शिरोमणि हुनुहुन्छ। श्रीकृष्णदासहरूको शाश्वत पथ-प्रदर्शक एवं भक्तियोगको भास्कर हुनुहुन्छ॥५४॥ तपाईं भक्तिको लागि जो उद्योग गरिरहनु भएको छ, यो तपाईंको लागि कुनै आश्चर्यको कुरा होईन। भगवान्का भक्तको लागि त भक्तिको सम्यक् स्थापना गर्नु सदा स्वभाविक नै हो ॥५५॥ ऋषिहरूले संसारमा अनेकौं मार्ग प्रकट गरेका छन्; किन्तु ती सबै कष्टसाध्य र परिणाममा केवल स्वर्गको नै प्राप्ति गराउँदछन्॥५६॥ अहिले सम्म भगवान्को प्राप्ति गराउने मार्ग त गुप्त नै छ। त्यसको उपदेश गर्ने पुरुष पनि प्रायः भाग्यले नै मिल्दछ॥५७॥ तपाईंलाई आकाशवाणीले जुन सत्कर्मको संकेत गरेको छ, त्यसलाई हामी भन्दछौं; तपाईं प्रसन्न र समाहितचित्त भएर सुन्नुहोस॥५८॥ नारदजी! द्रव्ययज्ञ, तपोयज्ञ, योगयज्ञ र स्वाध्यायरूप ज्ञानयज्ञ-यी सबै त स्वर्गादिको प्राप्ति गराउने कर्म तिरै संकेत गर्दछन्॥५९॥ पण्डितहरूले ज्ञानयज्ञलाई नै सत्कर्म (मुक्तिदायक कर्म) -को सूचक मानेका छन्। त्यो श्रीमद्भागवतको पारायण हो, जसको गान शुकादि महानुभावहरूले गर्नुभएको छ ॥६०॥ त्यसको शब्द सुन्ने बित्तिकै भक्ति, ज्ञान र वैराग्यलाई ठूलो बल मिल्नेछ। यसले ज्ञान-वैराग्यको कष्ट पनि मेटिन्छ र भक्तिलाई पनि आनन्छ मिल्नेछ॥६१॥ सिंहको गर्जना सुनेर जसरी ब्वाँसाहरू भाग्दछन्, त्यसैगरी श्रीमद्भागवतको ध्वनिले कलियुगका सारा दोष नष्ट हुन्छन्॥६२॥ तब प्रेमरस प्रवाहित गर्ने भक्तिको ज्ञान र वैराग्यलाई साथमा लिएर प्रत्येक घर र व्यक्तिको हृदयमा क्रीडा हुन्छ॥६३॥ नारदजीले भन्नुभयो-मैले वेद-वेदान्तको ध्वनि र गीतापाठ गरेर उनीहरूलाई जगाउन धेरै प्रयत्न गरें, किंतु फेरि पनि भक्ति, ज्ञान र वैराग्य-यी तीनै जागेनन् ॥६४॥ यस्तो स्थितिमा श्रीमद्भागवत सुनाउनाले तिनीहरू कसरी जाग्नेछन्? किनकी त्यस कथाको प्रत्येक श्लोक र प्रत्येक पदमा वेदहरूकै त सारांश छ॥६५॥ हजुरहरू शरणागतवत्सल हुनुहुन्छ तथा हजुरहरूको दर्शन कहिल्यै पनि व्यर्थ हुँदैन; यसैले मेरो यो संदेह नष्ट गरिदिनुहोस, यस कार्यमा विलम्ब पनि नगरिदिनु होस॥६६॥

**कुमारा ऊचुः**

**वेदोपनिषदां साराज्जाता भागवती कथा।**
**अत्युत्तमा ततो भाति पृथग्भूता फलाकृतिः ॥६७॥**
**आमूलाग्रं रसस्तिष्ठन्नस्ते न स्वाद्यते यथा।**
**स भूयः संपृथग्भूतः फले विश्वमनोहरः ॥६८॥**
**यथा दुग्धे स्थितं सर्पिर्न स्वादायोपकल्पते।**
**पृथग्भूतं हि तद्गव्यं देवानां रस वर्तनम् ॥६९॥**
**इक्षुणामपि मध्यान्तं शर्करा व्याप्य तिष्ठति।**
**पृथग्भूता च सा मिष्टा तथा भागवती कथा ॥७०॥**
**इदं भागवतं नाम पुराणं ब्रह्मसम्मितम्।**
**भक्तिज्ञानविरागाणां स्थापनाय प्रकाशितम् ॥७१॥**
**वेदान्तवेदसुस्नाते गीताया अपि कर्तरि।**
**परितापवति व्यासे मुह्यत्यज्ञानसागरे ॥७२॥**
**तदा त्वया पुरा प्रोक्तं चतुःश्लोकःसमन्वितम्।**
**तदीयश्रवणात्सद्यो निर्बाधो बादरायणः ॥७३॥**
**तत्र ते विस्मयः केन यतः प्रश्नकरो भवान्।**
**श्रीमद्भागवतं श्राव्यं शोकदुःखविनाशनम् ॥७४॥**

**नारद उवाच**

**यद्दर्शनं च विनिहन्त्यशुभानि सद्यः**
**श्रेयस्तनोति भवदुःखदवार्दितानाम्।**
**निःशेषशेषमुखगीतकथैकपानाः**
**प्रेमप्रकाशकृतये शरणं गतोऽस्मि ॥७५॥**
**भाग्योदयेन बहुजन्म समर्जितेन**
**सत्सङ्गमं च लभते पुरुषो यदा वै।**
**अज्ञानहेतुकृतमोहमदान्धकार–**
**नाशं विधाय हि तदोदयते विवेकः ॥७६॥**

**सनकादिले भन्नुभयो**–श्रीमद्भागवतको कथा वेद र उपनिषदहरूको सारले बनेको छ। यसैले उनीहरू भन्दा बेग्लै उनीहरूको फलरूपा भएकोले यो अत्यन्त उत्तम हुन्छ ॥६७॥ जसरी रस वृक्षको जड़ देखि लिएर हाँगाको टुप्पो सम्म रहन्छ, तर यो स्थितिमा त्यसको आस्वादन गर्न सकिंदैन, उही जब फलको रूपमा आउँछ, तब संसारमा सबैलाई प्रिय हुन्छ ॥६८॥ दूधमा घ्यू हुन्छ तर त्यसको बेग्लै स्वाद लिन सकिंदैन किंतु जब त्यो दुधबाट अलग हुन्छ तब देवताहरूको लागि पनि स्वादवर्धक हुन्छ ॥६९॥ चिनी उखुको छेउ–टुप्पो चारैतिर व्याप्त हुन्छ, तथापि अलग भएपछि त्यसको बेग्लै मिठास हुन्छ। यस्तै नै यो भागवतको कथा हो॥ ७०॥ यो भागवतपुराण वेदहरूको समान छ। श्रीव्यासदेवले यसलाई भक्ति, ज्ञान र वैराग्यको स्थापनाका लागि प्रकाशित गर्नुभएको हो ॥७१॥ पूर्वकालमा जतिबेला वेद–वेदान्तका पारगामी र गीताको पनि रचना गर्ने भगवान् व्यासदेव खिन्न भएर अज्ञानसमुद्रमा गोता लगाईरहनु भएको थियो, त्यतिबेला तपाईंले नै चार श्लोकहरूमा यसको उपदेश गर्नुभएको थियो। त्यसलाई सुनेर नै उनको सबै चिन्ता हटेको थियो ॥७२–७३॥ फेरि यसमा तपाईंलाई किन आश्चर्य भईरहेको छ, जो कि तपाईं हामीलाई प्रश्न गरिरहनु भएको छ? तपाईंले उनीहरूलाई शोक र दुःखको विनाश गर्ने श्रीमद्भागवत नै सुनाउनु पर्दछ॥ ७४॥ नारदजीले भन्नुभयो–हे महानुभावहरू! हजुरहरूको दर्शन जीवको सम्पूर्ण पापहरूलाई तत्काल नष्ट गरिदिन्छ र जो संसार–दुःखरूप दावानलले तपेका छन्, तिनीहरूमाथि शीघ्र नै शान्तिको वर्षा गर्दछ। हजुरहरू निरन्तर शेषजीको सहस्त्र मुखहरूबाट गाईएको भगवत्कथामृतको नै पान गरिरहनु हुन्छ। म प्रेमलक्षणा भक्तिको प्रकाश गर्ने उद्देश्यले हजुरहरूको शरणमा पर्दछु ॥७५॥ जब अनेकौं जन्मको संचित पुण्यपुंजको उदय भएपछि मनुष्यलाई सत्संग प्राप्त हुन्छ, तब त्यो उसको अज्ञानजनित मोह र मदरूप अन्धकारको नाश गरेर विवेकको उदय हुन्छ ॥७६॥

**इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमहात्म्ये कुमारनारदसंवादो नाम द्वितीयोऽध्यायः ॥२॥**

–★–

# अथ तृतीयोऽध्याय

## भक्तिको कष्टको निवृत्ति

नारद उवाच

**ज्ञानयज्ञं करिष्यामि शुकशास्त्रकथोज्ज्वलम्।**
**भक्तिज्ञानविरागाणां स्थापनार्थं प्रयत्नतः॥१॥**
**कुत्र कार्यो मया यज्ञः स्थलं तद्वाच्यतामिह।**
**महिमा शुकशास्त्रस्य वक्तव्यो वेदपारगैः॥२॥**
**कियद्भिर्दिवसैः श्राव्या श्रीद्भागवती कथा।**
**को विधिस्तत्र कर्तव्यो ममेदं ब्रुवतामितः॥३॥**

कुमारा ऊचुः

**शृणु नारद वक्ष्यामो विनम्राय विवेकिने।**
**गङ्गाद्वारसमीपे तु तटमानन्दनामकम्॥४॥**
**नाना ऋषिगणैर्जुष्टं देवसिद्धनिषेवितम्।**
**नानातरुलताकीर्णं नवकोमलवालुकम्॥५॥**
**रम्यम्येकान्तदेशस्थं हेमपद्मसुसौरभम्।**
**यत्समीपस्थजीवानां वैरं चेतसि न स्थितम्॥६॥**
**ज्ञानयज्ञस्त्वया तत्र कर्तव्यो ह्यप्रयत्नतः।**
**अपूर्वरसरूपा च कथा तत्र भविष्यति॥७॥**
**पुरःस्थं निर्बलं चैव जराजीर्णकलेवरम्।**
**तद्द्वयं च पुरस्कृत्य भक्तिस्तत्रागमिष्यति॥८॥**
**यत्र भागवती वार्ता तत्र भक्त्यादिकं व्रजेत्।**
**कथाशब्दं समाकर्ण्य तत्त्रिकं तरुणायते॥९॥**

सूत उवाच

**एवमुक्त्वा कुमारास्ते नारदेन समं ततः।**
**गङ्गातटं समाजग्मुः कथापानाय सत्वराः॥१०॥**

**नारदजी भन्नुहुन्छ**–अब म भक्ति, ज्ञान र वैराग्यलाई स्थापित गर्नको लागि प्रयत्नपूर्वक श्रीशुकदेवजीको मुखबाट भनिएको भागवतशास्त्रको कथाद्वारा उज्ज्वल ज्ञानयज्ञ गर्नेछु॥१॥ यो यज्ञ मैले कहाँ गर्नुपर्दछ, हजुरहरु यसको लागि कुनै स्थान बताईदिनुहोस। हजुरहरु वेदको पारगामी हुनुहुन्छ, यसैले मलाई यस शुकशास्त्रको महिमा सुनाउनु होस॥२॥ यो पनि भन्नुहोस कि श्रीमद्भागवतको कथा कति दिनमा सुनाउनु पर्दछ र त्यसलाई सुन्ने विधि के हो॥३॥

**सनकादिले भन्नुभयो**–नारदजी! तपाई धेरै विनीत र विवेकी हुनुहुन्छ। सुन्नुहोस, हामी तपाईलाई यो सबै कुरा भन्नेछौँ। हरिद्वार नजिकै आनन्द नामका एक घाट छ॥४॥ त्यहाँ अनेकौं ऋषि बस्दछां तथा देवता सिद्धहरु पनि त्यसको सेवन गर्दछन्। अनेक थरिका वृक्ष र लताहरुको कारण त्यो धेरै सघन छ र त्यहाँ धेरै राम्रो कोमल नवीन बालुवा (बिछाईएको जस्तो) छ॥५॥ त्यो घाट धेरै सुरम्य र एकान्त प्रदेशमा छ , त्यहाँ हर समय सुनौला कमलहरु को सुगन्ध आईरहन्छ। त्यसको आस पास रहने सिंह, हात्ती आदि परस्पर–विरोधी जीवहरुको चित्तमा पनि वैरभाव छैन॥६॥ त्यहाँ तपाई कुनै विशेष प्रयत्न बिना ज्ञानयज्ञ आरम्भ गरिदिनुहोस, त्यस स्थानमा कथामा अपूर्व रसको उदय हुनेछ॥७॥ भक्ति पनि आफ्नै आँखाको सामुन्ने निर्बल र जराजीर्ण अवस्थामा परेका ज्ञान र वैराग्यलाई साथ लिएर त्यहाँ आउनेछिन्॥८॥ किनकी जहाँ पनि श्रीमद्भागवतको कथा हुन्छ, त्यहाँ यी भक्ति आदि आफैं नै पुग्दछन्। त्यहाँ कानमा कथाको शब्द पर्ने बित्तिकै यी तीनै तरुण हुनेछन्॥९॥

**सूतजी भन्नुहुन्छ**–यस प्रकारले भनेर नारदजीको साथमा सनकादि पनि श्रीमद्भागवतकथामृतको पान गर्नको लागि त्यहाँ बाट तुरुन्त गंगातटमा आउनुभयो॥१०॥

**यदा यतास्तटं ते तु कोलाहलोऽप्यभूत्।**
**भूर्लोके देवलोके च ब्रह्मलोके तथैव च॥११॥**
**श्रीभागवतपीयुषपानाय रसलम्पटाः।**
**धावन्तोऽप्याययुः सर्वे प्रथमं ये च वैष्णवाः॥१२॥**
**भृगुर्वशिष्ठश्च्यवनश्च गौतमो**
**मेधातिथिर्देवलदेवरातौ।**
**रामस्तथा गाधिसुतश्च शाकलो**
**मृकण्डुपुत्रात्रिजपिप्लादाः॥१३॥**
**योगेश्वरौ व्यासपराशरौ च**
**छायाशुको जाजलिजह्नुमुख्याः।**
**सर्वेऽप्यमि मुनीगणाः सहपुत्रशिष्याः**
**स्वस्त्रीभिरराययुरतिप्रणयेन युक्ताः॥१४॥**
**वेदान्तानि च वेदाश्च मन्त्रास्तन्त्राः समूर्तयः।**
**दशसप्तपुराणानि षट्शास्त्राणि तथाऽऽययुः॥१५॥**
**गङ्गाद्याः सरितस्तत्र पुष्करादिसरांसि च।**
**क्षेत्राणि च दिशः सर्वा दण्डकादिवनानि च॥१६॥**
**नगादयो ययुस्तत्र देवगन्धर्वदानवाः ।**
**गुरुत्वात्तत्र नायातन्भृगुः सम्बोध्य चानयत्॥१७॥**
**दीक्षिता नारदेनाथ दत्तमासनमुत्तमम्।**
**कुमारा वन्दिताः सर्वैर्निषेदुः कृष्णतत्पराः॥१८॥**
**वैष्णवाश्च विरक्ताश्च न्यासिनो ब्रह्मचारिणः।**
**मुखभागे स्थितास्ते च तदग्रे नारदः स्थितः॥१९॥**
**एकभागे ऋषिगणास्तदन्यत्र दिवौकसः।**
**वेदोपनिषदोऽन्यत्र तीर्थान्यत्र स्त्रियोऽन्यतः॥२०॥**
**जयशब्दो नमःशब्दः शङ्खशब्द स्तथैव च।**
**चूर्णलाजाप्रसूनानां निक्षेपः सुमहानभूत्॥२१॥**
**विमानानि समारुह्य कियन्तो देवनायकाः।**
**कल्पवृक्षप्रसूनैस्तान् सर्वांस्तत्र समाकिरन्॥२२॥**

**सूत उवाच**

**एवं तेष्वेकचित्तेषु श्रीमद्भागवतस्य च।**
**माहात्म्यमूचिरे स्पष्टं नारदाय महात्मने॥२३॥**

जब उहाँहरू तटमा पुग्नुभयो, भूलोक, देवलोक र ब्रह्मलोक–सबैठाउँमा यस कथाको हल्ला फैलियो॥११॥ जो–जो भगवत्कथाको रसिक विष्णुभक्त थिए, ती सबै श्रीमद्भागवतामृतको पान गर्नको लागि सबैभन्दा अगाडि तँछाड–मछाड गर्दै आउन लागे॥१२॥ भृगु, वसिष्ठ, च्यवन, गौतम, मेधातिथि, देवल, देवरात, परशुराम, विश्वामित्र, शाकल, मार्कण्डेय, दत्तात्रेय, पिप्पलाद, योगेश्वर व्यास र पराशर, छायाशुक, जाजलि र जह्नु आदि सबै प्रधान–प्रधान मुनिगण आ–आफ्ना पुत्र, शिष्य र स्त्रिहरू सहित बड़ो प्रेमले त्यहाँ आए॥१३–१४॥ यिनीहरूको सिवा वेद, वेदान्त द्धउपनिषद्ऋ, मन्त्र, तन्त्र, सत्र पुराण र छ वटै शास्त्र पनि मूर्तिमान् भएर त्यहाँ उपस्थित भए॥१५॥गंगा आदि नदिहरू, पुष्कर आदि सरोवर, कुरुक्षेत्र आदि समस्त क्षेत्र, सम्पूर्ण दिशाहरू, दण्डक आदि वन, हिमालय आदि पर्वत तथा देव, गन्धर्व र दानव आदि सबै कथा सुन्नको लागि आईपुगे। जो कोही आफ्नो गौरवको कारण आएनन्, महर्षि भृगु उनीहरूलाई समझाई–बुझाई गरि लिएर आउनुभयो॥१६–१७॥तब कथा सुनाउनको लागि दीक्षित भएर श्री ष्ण–परायण सनकादि नारदजीले दिनुभएको श्रेष्ठ आसनमा विराजमान हुनुभयो। त्यस समय सबै श्रोताहरूले उहाँहरूको वन्दना गरे॥१८॥ श्रोताहरूमा वैष्णव, विरक्त, संन्यासी र ब्रह्मचारीहरू अगाडि बसे र उनीहरूको भन्दा अगाडि नारदजी विराजमान हुनुभयो॥१९॥ एक तर्फ ऋषिगण, एक तर्फ देवता, एक तर्फ वेद र उपनिषदादि तथा एक तर्फ तीर्थ बसे र दोस्रो तर्फ स्त्रिहरू बसे।॥२०॥ त्यस समय सबै तिर जय–जयकार, नमस्कार र शंखहरूको शब्द हुनलाग्यो र अबीर–गुलाल, लावा एवं फूलहरूको खूब वर्षा हुनथाल्यो॥२१॥ कुनै–कुनै देवश्रेष्ठ त विमानमा चढ़ेर, त्यहाँ बसेका सबै श्रोताहरूमा माथि कल्पवृक्षको पुष्प–वर्षा गर्न लागे॥२२॥

**सूतजी भन्नुहुन्छ–** यस प्रकार पूजा समाप्त भएपछि जब सबैजना एकाग्रचित्त भए, तब सनकादि ऋषि महात्मा नारदजीलाई श्रीमद्भागवतको माहात्म्य स्पष्ट गरेर सुनाउन प्रारम्भ गर्नुभयो॥२३॥

कुमारा ऊचुः

**अथ ते वर्ण्यतेऽस्माभिर्महिमा शुकशास्त्रजः।**
**यस्य श्रवणमात्रेण मुक्तिः करतले स्थिता॥२४॥**
**सदा सदा सेव्या श्रीमद्भागवती कथा।**
**यस्याः श्रवणमात्रेण हरिश्चित्तं समाश्रयेत्॥२५॥**
**ग्रन्थोऽष्टादशसाहस्रो द्वादशस्कन्धसम्मितः।**
**परीक्षिच्छुकसंवादः शृणु भागवतं च तत्॥२६॥**
**तावत्संसारचक्रेऽस्मिन् भ्रमतेऽज्ञानतः पुमान्।**
**यावत्कर्णगता नास्ति शुकशास्त्रकथा क्षणम्॥२७॥**
**किं श्रुतैर्बहुभिः शास्त्रैः पुराणैश्च भ्रमावहैः।**
**एकं भागवतं शास्त्रं मुक्तिदानेन गर्जति॥२८॥**
**कथा भागवतस्यापि नित्यं भवति यद्गृहे।**
**तद्गृहं तीर्थरूपं हि वसतां पापनाशनम्॥२९॥**
**अश्वमेधसहस्राणि वाजपेयशतानि च।**
**शुकशास्त्रकथायाश्च कलां नार्हन्ति षोडशीम्॥३०॥**
**तावत्पापानि देहेऽस्मिन्निवसन्ति तपोधनाः।**
**यावन्न श्रूयते सम्यक् श्रीमद्भागवतं नरैः॥३१॥**
**न गङ्गा न गया काशी पुष्करं न प्रयागकम्।**
**शुकशास्त्रकथायाश्च फलेन समतां नयेत्॥३२॥**
**श्लोकार्धं श्लोकपादं वा नित्यं भागवतोद्भवम्।**
**पठस्व स्वमुखेनैव यदिच्छसि परां गतिम्॥३३॥**
**वेदादिर्वेदमाता च पौरुषं सूक्तमेव च।**
**त्रयी भागवतं चैव द्वादशाक्षर एव च॥३४॥**
**द्वादशात्मा प्रयागश्च कालः संवत्सरात्मकः।**
**ब्राह्मणाश्चाग्निहोत्रं च सुरभिर्द्वादशी तथा॥३५॥**
**तुलसी च वसन्तश्च पुरुषोत्तम एवच।**
**एतेषां तत्त्वतः प्राज्ञैर्न पृथग्भाव इष्यते॥३६॥**
**यश्च भागवतं शास्त्रं वाचयेदर्थतोऽनिशम्।**
**जन्मकोटिकृतं पापं नश्यते नात्र संशयः॥३७॥**
**श्लोकार्धं श्लोकपादं वा पठेद्भागवतं च यः।**
**नित्यं पुण्यमवाप्नोति राजसूयाश्वमेधयोः॥३८॥**

**सनकादिले भन्नुभयो**–अब हामी तपाईलाई भागवत–शास्त्रको महिमा सुनाउँछौं। यसको श्रवण मात्रै मुक्ति हात लाग्छ॥२४॥ श्रीमद्भागवतको कथाको सदा–सर्वदा सेवन, आस्वादन गर्नुपर्दछ। यसको श्रवणमात्रले श्रीहरि हृदयमा आएर बस्नुहुन्छ॥२५॥ यस ग्रन्थमा अठारहजार श्लोक र बाह्र स्कन्ध छन् तथा श्रीशुकदेव र राजा परीक्षित्को संवाद छ। तपाई यो भागवतशास्त्र ध्यान दिएर सुन्नुहोस॥२६॥ यो जीव तबसम्म अज्ञानवश यस संसारचक्रमा भ्रमित हुन्छ, जबसम्म एकैछिन भएपनि उसको कानमा यस शुकशास्त्रको कथा पर्दैन॥२७॥ धेरै शास्त्र र पुराण सुन्नाले के लाभ छ र, यसले त अझै व्यर्थको भ्रम नै बढ्दछ। मुक्ति दिनको लागि त एकमात्र भागवतशास्त्र नै गर्जना गरिरहेको छ॥२८॥ जुन घरमा नित्यप्रति श्रीमद्भागवतको कथा हुन्छ, त्यो तीर्थरूप हुनजान्छ र जो मान्छे त्यसमा बस्दछन्, तिनीहरूको सम्पूर्ण पाप नष्ट हुन्छन्॥२९॥ हजारौं अश्वमेध र सयौं वाजपेय यज्ञ यस शुकशास्त्रको कथाको सोह्रौं अंश पनि हुन सक्दैनन्॥३०॥ तपोधनहरू! जबसम्म राम्रो सँग श्रीमद्भागवतको श्रवण गर्दैनन्, तबसम्म उनीहरूको शरीरमा पाप निवास गर्दछ॥३१॥ फलको दृष्टिले यस शुकशास्त्रकथाको समता गंगा, गया, काशी, पुष्कर या प्रयाग कुनै पनि तीर्थ गर्न सक्दैन॥३२॥ यदि तपाईलाई परमगतिको इच्छा छ भने आफ्नै मुखले श्रीमद्भागवतको आधा अथवा चौथाई श्लोकको भएपनि नित्य नियमपूर्वक पाठ गर्नुहोस॥३३॥ ॐकार, गायत्री, पुरुषसूक्त, तीनै वेद, श्रीमद्भागवत, 'ॐ नमो भगवते वासुदेवाय'– यो द्वादशाक्षर मन्त्र, बाह्र मूर्ति भएका सूर्यभगवान, प्रयाग, संवत्सररूप काल, ब्राह्मण, अग्निहोत्र, गाई, द्वादशी तिथि, तुलसी, वसन्त–ऋतु र भगवान् पुरुषोत्तम–यी सबैमा बुद्धिमान् मनुष्य वस्तुतः कुनै अन्तर मान्दैनन्॥३४–३६॥ जुन पुरुष अहर्निश अर्थसहित श्रीमद्भागवत–शास्त्रको पाठ गर्दछ, त्यसको करोड़ौ जन्मसम्मको पापहरू नष्ट हुनजान्छ यसमा अलिकति पनि संदेह छैन॥३७॥ जुन पुरुष नित्यप्रति भागवतको आधा या चौथाई श्लोक पनि पढ्दछ, उसलाई राजसूय र अश्वमेधयज्ञहरूको फल मिल्दछ॥३८॥

**उक्तं भागवतं नित्यं कृतं च हरिचिन्तनम्।**
**तुलसीपोषणं चैव धेनूनां सेवनं समम्॥३९॥**
**अन्तकाले तु येनैव श्रुयते शुकशास्त्रवाक्।**
**प्रीत्या तस्यैव वैकुण्ठं गोविन्दोऽपि प्रयच्छति॥४०॥**
**हेमसिंहयुतं चैतद्वैष्णवाय ददाति च।**
**कृष्णेन सह सायुज्यं स पुमाँल्लभते ध्रुवम्॥४१॥**
**आजन्ममात्रमपि येन शठेन किंचि-**
**च्चित्तं विधाय शुकशास्त्रकथा न पीता।**
**चाण्डालवच्च खरवद्बत तेन नीतं**
**मिथ्या स्वजन्म जननीजनिदुःखभाजा॥४२॥**
**जीवच्छवो निगदितः स तु पापकर्मा**
**येन श्रुतं शुककथावचनं न किंचित्।**
**धिक् तं नरं पशुसमं भुवि भाररूप-**
**मेवं वदन्ति दिवि देवसमाजमुख्याः॥४३॥**
**दुर्लभैव कथा लोके श्रीमद्भागवतोद्भवा।**
**कोटिजन्मसमुत्थेन पुण्येनैव तु लभ्यते॥४४॥**
**तेन योगनिधे धीमन् श्रोतव्या सा प्रयत्नतः।**
**दिनानां नियमो नास्ति सर्वदा श्रवणं मतम्॥४५॥**
**सत्येन ब्रह्मचर्येण सर्वदा श्रवणं मतम्।**
**अशक्यत्वात्कलौ बोध्यो विशेषोऽत्र शुकाज्ञया॥४६॥**
**मनोवृत्तिजयश्चैव नियमाचारणं तथा।**
**दीक्षां कर्तुमशक्यत्वात्सप्ताहश्रवणं मतम्॥४७॥**
**श्रद्धातः श्रवणे नित्यं माघे तावद्धि यत्फलम्।**
**तत्फलं शुकदेवेन सप्ताहश्रवणे कृतम्॥४८॥**
**मनसश्चाजयाद्रोगात्पुंसां चैवायुषः क्षयात्।**
**कलेदोषबहुत्वच्च सप्ताहश्रवणं मतम्॥४९॥**
**यत्फलं नास्ति तपसा न योगेन समाधिना।**

नित्य भागवतको पाठ गर्नु, भगवान्को चिन्तन गर्नु, तुलसीको सिंचाई गर्नु र गाईको सेवा गर्नु–यी चारै समान छन्॥३९॥ जुन पुरुष अन्तिम समयमा श्रीमद्भागवतको वाक्य सुन्दछ, त्यसमाथि प्रसन्न भएर भगवान् त्यसलाई वैकुण्ठधाम प्रदान गर्नुहुन्छ॥४०॥ जुन पुरुष यसलाई सुनको सिंहासनमा राखेर विष्णुभक्तलाई दान गर्दछ, त्यो अवश्य नै भगवान्को सायुज्य प्राप्त गर्दछ॥४१॥ जुन दुष्टले आफ्नो जिवनभरिमा चित्तलाई एकाग्र गरेर श्रीमद्भागवतामृतको अलिकति पनि रसास्वादन गरेर, उसले त आफ्नो सारा जीवन चाण्डाल र गधको समान व्यर्थ नै गँवायोय त्यो त आफ्नी आमालाई प्रसव–पीड़ा दिनको लागि नै उत्पन्न भएको हो॥४२॥ जसले यस शुकशास्त्रको अलिकति पनि वचन सुनेन, त्यो पापात्मा त बाँचेर पनि मूर्दाको समान छ। ‘पृथ्वीको भारस्वरूप त्यस पशुतुल्य मनुष्यलाई धिक्कार छ’ य स्वर्गलोकमा देवताहरूमा प्रधान इन्द्रादि भन्ने गर्दछन्॥४३॥ संसारमा श्रीमद्भागवतको कथा मिल्न नै अत्यन्त कठिन छ; जब करोड़ौं जन्मको पुण्य हुन्छ, तब यसको प्राप्ति हुन्छ॥४४॥ नारदजी! तपाई धेरै बुद्धिमान् र योगनिधि हुनुहुन्छ। तपाई प्रयत्नपूर्वक कथाको श्रवण गर्नुहोस। यसलाई सुन्नको लागि दिनहरूको कुनै नियम छैन, यसलाई त सर्वदा सुन्नु नै राम्रो हो॥४५॥ यसलाई सत्यभाषण र ब्रह्मचर्यपालनपूर्वक सर्वदा नै सुन्न श्रेष्ठ मानिएको छ। किन्तु कलियुगमा यस्तो हुनु धेरै कठिन छय यसैले शुकदेवजीले जुन विशेष विधि बताउनु भएको छ, त्यो जान्नुपर्दछ॥४६॥ कलियुगमा धेरै दिनसम्म चित्तको वृत्तिहरूलाई वशमा राख्न, नियमहरूमा बाँधिन र कुनै पुण्यकार्यको लागि दीक्षित भएर बस्नु अत्यन्त कठिन छय यसैले सप्ताहश्रवणको विधि छ॥४७॥ श्रद्धापूर्वक जहिल्यै पनि गर्नाले अथवा माघमासमा श्रवण गर्नाले जुन फल हुन्छ, त्यही फल श्रीशुकदेवजीले सप्ताहश्रवणमा निर्धारित गर्नुभएको छ॥४८॥ मनको असंयम, रोगहरूको बहुलता र आयुको अल्पताको कारण तथा कलिुगमा अनेकौ दोषहरूको सम्भावनाले नै सप्ताहश्रवणको विधान गरिएको छ॥४९॥ जुन फल तप, योग र समाधिबाट पनि प्राप्त हुनसक्दैन, त्यो सर्वांगरूपमा सप्ताहश्रवणद्वारा

अनयासेन तत्सर्वं सप्ताहश्रवणे लभेत् ॥५०॥
यज्ञाद्गर्जति सप्ताहः सप्ताहो गर्जति व्रतात्।
तपसो गर्जति प्रोच्चैस्तीर्थान्नित्यं हि गर्जति ॥५१॥
योगाद्गर्जति सप्ताहो ध्यानाज्ज्ञानाच्च गर्जति।
किं ब्रूमो गर्जनं तस्य रे रे गर्जति गर्जति ॥५२॥

शौनक उवाच

साश्चर्यमेतत्कथितं कथानकं
ज्ञानादिधर्मान् विगणय्य साम्प्रतम्।
निःश्रेयसे भागवतं पुराणं
जातं कुतो योगविदादिसूचकम् ॥५३॥

सूत उवाच

यदा कृष्णो धरां त्यक्त्वा स्वपदं गन्तुमुद्यतः।
एकादशं परिश्रुत्याप्युद्धवो वाक्यमब्रवीत् ॥५४॥

उद्धव उवाच

त्वं तु यास्यसि गोविन्द भक्तकार्यं विधाय च।
मच्चित्ते महती चिन्ता तां श्रुत्वा सुखमावह ॥५५॥
आगतोऽयं कलिर्घोरो भविष्यन्ति पुनः खलाः।
तत्सङ्गेनैव सन्तोऽपि गमिष्यन्त्युग्रतां यदा ॥५६॥
तदा भारवती भूमिर्गोरूपेयं कमाश्रयेत्।
अन्यो न दृश्यते त्राता त्वत्तः कमललोचन ॥५७॥
अतः सत्सु दयां कृत्वा भक्तवत्सल मा व्रज।
भक्तार्थं सगुणो जातो निराकारोऽपि चिन्मय ॥५८॥
त्वद्वियोगेन ते भक्ताः कथं स्थास्यन्ति भूतले।
निर्गुणोपासने कष्टमतः किंचिद्विचारय ॥५९॥
इत्युद्धववचः श्रुत्वा प्रभासेऽचिन्तयद्धरिः।
भक्तावलम्बनार्थाय किं विधेयं मयेति च ॥६०॥
स्वकीयं यद्भवेत्तेजस्तच्च भागवतेऽदधात्।

सहजमा नै मिल्दछ ॥५०॥ सप्ताहश्रवण यज्ञभन्दा ठूलो हो, व्रतभन्दा पनि ठूलो छ, तपभन्दा पनि कहीं ठूलो छ। तीर्थसेवनभन्दा त सदा नै ठूलो छ, योग भन्दा पनि ठूलो छ–यहाँसम्म कि ध्यान र ज्ञानभन्दा पनि ठूलो छ, अजी! यसको विशेषताको कहाँसम्म वर्णन गरौं, यो त सबैभन्दा ठूलो छ ॥५१–५२॥

**शौनकजीले सोध्नुभयो**–सूतजी! यो त तपाईले निकै आश्चर्यको कुरा गर्नुभयो। अवश्य नै यो भागवत पुराण योगवेत्ता ब्रह्माजीको पनि आदिकारण श्रीनारायणको निरूपण गर्दछय परन्तु यो मोक्षको प्राप्तिमा ज्ञानादि सबै साधनहरूको तिरस्कार गरेर यस युगमा उनीहरू भन्दा पनि ठूलो कसरी भयो ॥५३॥

**सूतजीले भन्नुभयो**–शौनकजी! जब भगवान् श्रीकृष्ण यस धराधामलाई छोडेर आफ्नो नित्यधाममा जान लाग्नु–भयो, तब उहाँको मुखारविन्दबाट एकादश स्कन्धको ज्ञानोपदेश सुनेर पनि उद्धवजीले सोध्नुभयो ॥५४॥

**उद्धवजीले भन्नुभयो**–गोविन्द! अब हजुर त आफ्ना भक्तहरूको कार्य गरेर परमधाम जान चाहनुहुन्छय तर मेरो मनमा एउटा ठूलो चिन्ता छ। त्यसलाई सुनेर हजुर मलाई शान्त गर्नुहोस ॥५५॥ अब घोर कलिकाल आएको नै मान्नुहोस, यसैले संसारमा अनेकौं दुष्ट प्रकट हुनेछन् उनीहरूको संसर्गले जब अनेकौं सत्पुरुष पनि उग्र प्र तिका हुनेछन्, तब उनीहरूको भारबाट थिचिएर यी गो रूपिणी पृथ्वी कसको शरणमा जान्छिन्? कमलनयन! मलाई त हजुरलाई छोडेर यसको रक्षा गर्ने पनि कोही देखिंदैन ॥५६–५७॥ यसैले हे भक्तवत्सल! हजुर साधुहरू माथि  पा गरेर यहाँबाट नजानुहोस। भगवन्! हजुरले निराकार र चिन्मात्र भएर पनि भक्तहरूको लागि नै त यो सगुण रूप धारण गर्नुभएको छ ॥५८॥ फेरि भला, हजुरको वियोग भएपछि त ती भक्तजनहरू कसरी बस्न सक्दछन्? निर्गुणोपासनामा त धेरै कष्ट छ। यसैले अरु केही विचार गर्नुहोस ॥५९॥ प्रभासक्षेत्रमा उद्धवजीको यी वचन सुनेर भगवान् सोच्न लाग्नुभयो कि भक्तहरूको अवलम्बको लागि मैले के व्यवस्था गर्नु पर्दछ ॥६०॥ शौनकजी! तब भगवान्ले आफ्नो सम्पूर्ण शक्ति भागवतमा राखिदिनुभयो र अन्तर्धान भएर

तिरोधाय प्रविष्टोऽयं श्रीमद्भागवतार्णवम् ॥६१॥
तेनेयं वाङ्मयी मूर्तिः प्रत्यक्षा वर्तते हरेः।
सेवनाच्छ्रवणात्पाठाद्दर्शनात्पापनाशिनी ॥६२॥
सप्ताहश्रवणं तेन सर्वेभ्योऽप्यधिकं कृतम्।
साधनानि तिरस्कृत्य कलौ धर्मोऽयमीरितः ॥६३॥
दुःखदारिद्र्यदौर्भाग्यपापप्रक्षालनाय च।
कामक्रोधजयार्थं हि कलौ धमोऽयमीरितः ॥६४॥
अन्यथा वैष्णवी माया देवैरपि सुदुस्त्यजा।
कथं त्याज्या भवेत्पुम्भिः सप्ताहोऽतः प्रकीर्तितः ॥६५॥

सूत उवाच

एवं नगाहश्रवणोरुधर्मे
प्रकाश्यमाने ऋषिभिः सभायाम्।
आश्चर्यमेकं समभूत्तदानीं
तदुच्यते संश्रृणु शौनक त्वम् ॥६६॥
भक्ति सुतौ तौ तरुणौ गृहीत्वा
प्रेमैकरूपा सहसाऽऽविरासीत्।
श्रीकृष्ण गोविन्द हरे मुरारे
नाथेति नामानि मुहुर्वदन्ति ॥६७॥
ता चागतां भागवतार्थभूषां
सुचारुवेषां ददृशुः सदस्याः।
कथं प्रविष्टा कथमागतेयं
मध्ये मुनीनामिति तर्कयन्तः ॥६८॥
ऊचुः कुमारा वचनं तदानीं
कथार्थतो निष्पतिताधुनेयम्।
एवं गिरः सा ससुता निशम्य
सनत्कुमारं निजगाद नम्रा ॥६९॥

भक्तिरुवाच

भवद्भिरद्यैव कृतास्मि पुष्टा
कलिप्रणष्टापि कथारसेन।
क्वाहं तु तिष्ठाम्यधुना ब्रुवन्तु
ब्राह्मा इदं तां गिरमूचिरे ते ॥७०॥
भक्तेषु गोविन्दसरूपकर्त्री
प्रेमैकधर्त्री भवरोगहन्त्री।
सा त्वं च तिष्ठस्व सुधैर्यसंश्रया
निरन्तरं वैष्णवमानसानि ॥७१॥

यस भागवतसमुद्रमा प्रवेश गर्नुभयो ॥६१॥ यसैले यो भगवान्को साक्षात् शब्दमयी मूर्ति हो। यसको सेवन, श्रवण, पाठ अथवा दर्शनमात्र ले नै मनुष्यको सारा पाप नष्ट हुनजान्छन् ॥६२॥ यसैले यसको सप्ताहश्रवण सबैभन्दा ठूलो मानिएको छ र कलियुगमा त अन्य सबै साधनहरूलाई छोडेर यही प्रधान धर्म भनिएको छ ॥६३॥ कलिकालमा यही यस्तो धर्म हो, जुन दुःख, दरिद्रता, दुर्भाग्य र पापहरूको सफाई गरिदिन्छ तथा काम–क्रोधादि शत्रुहरू माथि विजय दिलाउँछ ॥६४॥ अन्यथा, भगवान्को यस मायाबाट पीछा छुटाउन देवताहरूका लागि पनि कठिन छ, भने मनुष्य त यसलाई कसरी छोड्न सक्दछन्। अतः यसबाट छूट्नको लागि पनि सप्ताहश्रवणको विधान गरिएको छ ॥६५॥

**सूतजी भन्नुहुन्छ**–शौनकजी! जतिबेला सनकादि मुनीश्वर यस प्रकार सप्ताहश्रवणको महिमाको बखान गरिरहनु भएको थियो, त्यस सभामा एउटा आश्चर्य भयो, त्यसलाई म भन्दछु, सुन ॥६६॥ त्यहाँ तरुणावस्थालाई प्राप्त गरेका आफ्ना दुई पुत्रहरूलाई साथमा लिएर विशु) प्रेमरूपा भक्ति बारम्बार 'श्रीकृष्ण! गोविन्द! हरे! मुरारे! हे नाथ! नारायण! वासुदेव!' आदि भगवन्नामहरूको उच्चारण गर्दै अकस्मात् प्रकट भईन् ॥६७॥ सबै सदस्यहरूले देखे कि परम सुन्दरी भक्तिरानी भागवतको अर्थहरूको आभूषण पहिरेर त्यहाँ पदार्पण गरिन्। मुनिहरूको त्यस सभाम सबै यो तर्क–वितर्क गर्न लागे कि यहाँ किन आईन कसरी प्रवेश गरिन् ॥६८॥ तब सनकादिले भन्नुभयो–'यिनी भक्तिदेवी अहिले भर्खरै कथाको अर्थबाट निस्किएकी हुन्।' उहाँहरूको यो वचन सुनेर भक्तिले आफ्ना पुत्रहरू सहित अत्यन्त विनम्र भएर सनत्कुमारजीसँग भनिन् ॥६९॥

**भक्तिले भनिन्**–म कलियुगम नष्टप्राय भईसकेकी थिएं, हजुरले कथामृतबाट सिंचेर मलाई फेरि पुष्ट गरिदिनुभयो। अब भन्नुहोस कि म कहाँ बसूँ? यो सुनेर सनकादिले उनीसँग भन्नुभयो– ॥७०॥ 'तिमी भक्तहरूलाई भगवान्को स्वरूप प्रदान गर्नेवाली, अनन्यप्रेमको सम्पादन गर्नेवाली र संसार रोगलाई निर्मूल

**ततोऽपि दोषाः कलिजा इमे त्वां**
**द्रष्टुं न शक्ताः प्रभवोऽपि लोके।**
**एवं तदाज्ञावसरेऽपि भक्ति-**
**स्तदा निषण्णा हरिदासचित्ते॥७२॥**
**सकलभुवनमध्ये निर्धनास्तेऽपि धन्या**
**निवसति हृदि येषां श्रीहरेर्भक्तिरेका।**
**हररिपि निजलोकं सर्वथातो विहाय**
**प्रविशति हृदि तेषां भक्तिसूत्रोपनद्धः॥७३॥**
**ब्रूमोऽद्य ते किमधिकं महिमानमेवं**
**ब्रह्मात्मकस्य भुवि भागवताभिधस्य।**
**यत्संश्रयान्निगदिते लभते सुवक्ता**
**श्रोतापि कृष्णसमतामलमन्यधर्मैः॥७४॥**

गर्नेवाली हौ अतः तिमी धैर्य धारण गरेर नित्य–निरन्तर विष्णुभक्तहरूको हृदयमा नै निवास गर॥७१॥ यो कलियुगको दोष भलै सारा संसारमाथि आफ्नो प्रभाव पार्छ, किन्तु त्यहाँ तिमीमाथि यसको दृष्टि पनि पर्न सक्दैन।' यस प्रकार सनकादिको आज्ञा पाउने बित्तिकै भक्ति तुरुन्त भगवद्भक्तको हृदयमा गएर विराजमान भईन्॥ ७२॥ जसको हृदयमा एकमात्र श्रीहरिको भक्ति निवास गर्दछ ती त्रिलोकीमा अत्यन्त निर्धन भएर पनि परम धन्य हुन किनकी यस भक्तिको डोरीले बाँधिएर साक्षात् भगवान् पनि आफ्नो परमधाम छोड़ेर उनीहरूको हृदयमा आएर बस्नुहुन्छ॥ ७३॥ भूलोकमा यो भागवत साक्षात् परब्रह्मको विग्रह हो, हामी यसको महिमा कहाँसम्म वर्णन गरौं। यसको आश्रय लिएर यसलाई सुनाउनाले सुन्ने र सुनाउने दुबैलाई नै भगवान् श्री ष्णको समता प्राप्त हुनजान्छ। अतः यसलाई छोडेर अन्य धर्महरू सँग के प्रयोजन छ र॥७४॥

**इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमहात्म्ये भक्तिकष्टनिवर्तनं नाम तृतीयोऽध्यायः॥३॥**

–★–

# अथ चतुर्थोऽध्यायः

## गोकर्णद्वारा पितालाई वैराग्यको उपदेश

**सूत उवाच**
**अथ वैष्णवचित्तेषु दृष्ट्वा भक्तिमलौकिकीम्।**
**निजलोकं परित्यज्य भगवान् भक्तवत्सलः॥१॥**

**वनमाली घनश्यामः पीतवासा मनोहरः।**
**काञ्चीकलापरुचिरो लसन्मुकुटकुण्डल॥२॥**

**त्रिभङ्गललितश्चारुकौस्तुभेन विराजितः।**
**कोटिमन्मथलावण्यो हरिचन्दनचर्चितः॥३॥**

**सूतजी भन्नहुन्छ**–मुनिवर! त्यस समय आफ्ना भक्तहरुको चित्तमा अलौकिक भक्तिको प्रादुर्भाव भएको देखेर भक्तवत्सल श्रीभगवान् आफ्नो धाम छोडेर त्यहाँ आउनुभयो॥१॥ उहाँको गलामा वनमाला शोभा पाईरहेको थियो, श्रीअंग सजल जलधरको समान श्यामवर्ण थियो, त्यसमा मनोहर पीताम्बर सुशोभित थियो, कटिप्रदेश करधनीले सुसज्जित थियो, सिरमा मुकुटको लटक र कानमा कुण्डलको झिलमिलाहट देख्दैमा आनन्दित बनाउँथ्यो॥२॥ त्रिभंगललित भावले उभिंदा चित्तलाई पनि चोर्नुहुन्थ्यो। वक्षःस्थलमा कौस्तुभमणि चम्किरहेको थियो, सारा श्रीअंगमा हरि–चन्दनको लेपन थियो। त्यस रूपको शोभा त के भनौं

**परमानन्दचिन्मूर्तिर्मधुरो मुरलीधरः।**
**आविवेश स्वभक्तानां हृदयान्यमलानि च॥ ४॥**
**वैकुण्ठवासिनो ये च वैष्णवा उद्धवादयः।**
**तत्कथाश्रवणार्थं ते गुढरूपेण संस्थिताः॥५॥**
**तदा जय जयारावो रसपुष्टिरलौकिकी।**
**चूर्णप्रसूनवृष्टिश्च मुहुः शङ्खरवोऽप्यभूत्॥६॥**
**तत्सभासंस्थितानां च देहगेहात्मविस्मृतिः।**
**दृष्ट्वा च तन्मयावस्थां नारदो वाक्यमब्रवीत्॥७॥**
**अलौकिकोऽयं महिमा मुनीश्वराः**
**सप्ताहजन्योऽद्य विलोकितो मया।**
**मूढाः शठा ये पशुपक्षिणोऽत्र**
**सर्वेऽपि निष्पापतमा भवन्ति॥८॥**
**अतो नृलोके ननु नास्ति किंचि-**
**च्चित्तस्य शोधाय कलौ पवित्रम्।**
**अघौघविध्वंसकरं तथैव**
**कथासमानं भुवि नास्ति चान्यत्॥९॥**
**के के विशुद्ध्यन्ति वदन्तु मह्यं**
**सप्ताहयज्ञेन कथामयेन।**
**कृपालुभिर्लोकहितं विचार्य**
**प्रकाशितः कोऽपि नवीनमार्गः॥१०॥**
**कुमारा ऊचुः**
**ये मानवा पापकृतस्तु सर्वदा**
**सदा दुराचाररता विमार्गगाः।**
**क्रोधाग्निदग्धाः कुटिलाश्च कामिनः**
**सप्ताहयज्ञेन कलौ पुनन्ति ते॥११॥**
**सत्येन हीनाः पितृमातृदूषका-**
**स्तृष्णाकुलाश्चाश्रमधर्मवर्जिताः।**
**ये दाम्भिका मत्सरिणोऽपि हिंसकाः**
**सप्ताहयज्ञेन कलौ पुनन्ति ते॥१२॥**
**पञ्चोग्रपापाश्छलछद्मकारिणः**
**क्रूराः पिशाचा इव निर्दयाश्च ये।**
**ब्रह्मस्वपुष्टा व्यभिचारिणः**
**सप्ताहयज्ञेन कलौ पुनन्ति ते॥१३॥**

र, त्यसले त मानौं करोड़ौ कामदेवहरूको रूपमाधुरीलाई छिनेको थियो॥३॥ ती परमानन्दचिन्मूर्ति मधुरातिमधुर मुरलीधर यस्तो अनुपम छबिले आफ्ना भक्तहरूको निर्मल चित्तमा आविर्भूत हुनुभयो॥४॥ भगवान्को नित्य लोकनिवासी लीलापरिकर उद्धवादि त्यहाँ गुप्तरूपले त्यस कथालाई सुन्नको लागि आएका थिए॥५॥ प्रभु प्रकट हुने बित्तिकै चारै तिर 'जय हो! जय हो!' को ध्वनि हुन लाग्यो। त्यस समय भक्तिरसको अद्‌भुत प्रवाह बग्यो, बारम्बार अबीर–गुलाल र पुष्पको वर्षा तथा शंखध्वनि हुनथाल्यो॥६॥ त्यस सभामा जति पनि बसेका थिए, आफ्नो देह, गेह र आत्माको पनि सुध कसैलाई रहेन। उनीहरूको यस्तो तन्मयता देखेर नारदजी भन्नलाग्नुभयो–॥७॥ मुनीश्वरगण! आज सप्ताह–श्रवणको मैले यो अद्‌भुत अलौकिक महिमा देखें। यहाँ त जो भयंकर मूर्ख, दुष्ट र पशु–पक्षी पनि छन्, ती सबै अत्यन्त निष्पाप भएका छन्॥८॥ अतः यसमा कुनै संदेह छैन कि कलिकालमा चित्तको शुद्धिको लागि यस भागवतकथाको समान मर्त्यलोकमा पापपुंजको नाश गर्नेवाला अर्को कुनै पवित्र साधन छैन॥९॥ मुनिवर! हजुर अत्यन्त पालु हुनुहुन्छ, हजुरले संसारको कल्याणको विचार गरेर यो बिल्कुलै अनौठो मार्ग निकाल्नु भएको छ। हजुर पया यो त भन्नुहोस कि यस कथारूप सप्ताहयज्ञको द्वारा संसारमा कस्ता–कस्ता मान्छे पवित्र हुन्छन्॥१०॥

**सनकादिले भन्नुभयो**– जो मान्छे अनेक तरहका पाप गर्दछन्, निरन्तर दुराचारमा नै तत्पर रहन्छ्न् र उल्टोबाटो हिंड्ने गर्छन् तथा जो क्रोधाग्नी मा जलिरहने, कुटिल र कामपरायण छन्, ती सबै यश कलियुगमा सप्ताहयज्ञले पवित्र हुन्छन्॥११॥जो सत्यबाट च्युत, माता–पिताको निन्दा गर्ने, तृष्णाले व्याकुल, आश्रमधर्मले रहित, दम्भी, अर्काको उन्नति देखेर मुर्मुरिने र अर्कालाई दुःख दिनेवाला छन्, ती पनि कलियुगमा सप्ताहयज्ञले पवित्र हुन्छन्॥१२॥ जो मदिरापान, ब्रह्महत्या, सुवर्णको चोरी, गुरुस्त्रीगमन र विश्वासघात–यी पाँच महापाप गर्नेहरु, छल–छद्मपरायण, क्रूर, पिशाचहरुको समान निर्दयी, ब्राह्मणहरुको धनले पुष्ट हुनेवाला र व्यभिचारीछन्,

**कायेन वाचा मनसापि पातकं**
**नित्यं प्रकुर्वन्ति शठा हठेन ये।**
**परस्वपुष्टा मलिना दुराशयाः**
**सप्ताहयज्ञेन कलौ पुनन्ति ते॥१४॥**

**अत्र ते कीर्तयिष्यामि इतिहासं पुरातनम्।**
**यस्य श्रवणमात्रेण पापहानिः प्रजायते॥१५॥**

**तुङ्गभद्रातटे पूर्वमभूत्यत्तनमुत्तमम्।**
**यत्र वर्णाः स्वधर्मेण सत्यसत्कर्मतत्पराः॥१६॥**

**आत्मदेव पुरेतस्मिन् सर्ववेदविशारदः।**
**श्रौतस्मार्तेषु निष्णातो द्वितीय इव भाष्करः॥१७॥**

**भिक्षुको वित्तवाँल्लोके तत्प्रिया धुन्धुली स्मृता।**
**स्ववाक्यस्थापिका नित्यं सुन्दरी सुकुलोद्भवा॥१८॥**

**लोकवार्तारता क्रूरा प्रायशोबहुजल्पिका।**
**शूरा च गृहकृत्येषु कृपणा कलहप्रिया॥१९॥**

**एवं निवसतोः प्रेम्णा दम्पत्यो रममाणयोः।**
**अर्थाः कामास्तयोरासन्न सुखाय गृहादिकम्॥२०॥**

**पश्चाद्धर्माः समारब्धास्ताभ्यां संतानहेतवे।**
**गोभूहिरण्यवासांसि दीनेभ्यो यच्छतः सदा॥२१॥**

**धनार्धं धर्ममार्गेण ताभ्यां नीतं तथापि च ।**
**न पुत्रो नापि वा पुत्री ततश्चिन्तातुरो भृशम्॥२२॥**

**एकदा स द्विजो दुःखाद्गृहं त्यक्त्वा वनं गतः।**
**मध्याह्ने तृषितो जातस्तडागं समुपेयिवान्॥२३॥**

**पीत्वा जलं निषण्णस्तु प्रजादुःखेन कर्शितः।**
**मुहूर्तादपि तत्रैव संन्यासी कश्चिदागतः॥२४॥**

ती पनि कलियुगमा सप्ताहयज्ञद्वारा पवित्र हुन्छन्॥१३॥ जुन दुष्ट आग्रहपूर्वक सर्वदा मन, वाणी या शरीरबाट पाप गरिरहन्छन्, अरुको धनले नै पुष्ट हुन्छन् तथा मलिन मन र दुष्ट हृदयवाला छन् , ती पनि कलियुगमा सप्ताहयज्ञबाट पवित्र हुन्छन् ॥१४॥ नारदजी! अब हामी यस विषयमा एक प्राचीन इतिहास सुनाउँदछौं, त्यसलाई सुन्नाले नै सबै पाप नष्ट हुन्छन्॥१५॥ धेरै पहिले तुंगभद्रा नदीको तटमा एक अनुपम नगर बसेको थियो। त्यहाँ सबै वर्गका मानिसहरु आ-आफ्नो धर्मको आचरण गर्दै सत्य र सत्कर्ममा तत्पर रहन्थे॥१६॥ त्यस नगरमा समस्त वेदहरुका विशेषज्ञ र श्रौत-स्मार्त कर्महरुमा निपुण एक आत्मदेव नामक ब्राह्मण बस्दथे, उनी साक्षात् दोस्रो सूर्यको समान तेजस्वी थिए॥१७॥ उनी धनी भएर पनि भिक्षाजीवी थिए। उनको प्यारी पत्नी धुन्धुली कुलीन एवं सुन्दरी भएपनि सदा आफ्नै कुरा ठूलो हुनुपर्ने खालकी थिई॥१८॥ त्यसलाई अर्काको कुरा काट्नमा नै सुख मिल्दथ्यो। स्वभाव थियो क्रूर। प्रायः केही-न-केही बकवाद गरिरहन्थि। गृहकार्यमा निपुण थिई, कृपण थिई, र थिई झगड़ालु पनि॥१९॥ यस प्रकार ब्राह्मण-दम्पति प्रेमले आफ्नो घरमा बस्दथे। उनीहरु सँग अर्थ र भोग विलासको सामग्री धेरै थियो। घर-द्वार पनि सुन्दर थिए, परन्तु त्यसबाट सुख थिएन किनभने उनीहरूका सन्तान थिएनन्॥२०॥ जब उमेर ढल्न लाग्यो, तब उनीहरुले सन्तानको लागि तरह-तरहका पुण्यकर्म आरम्भ गरे र तिनीहरु दीन-दुःखिहरुलाई, गाई, पृथ्वी, सुवर्ण र वस्त्रादि दान गर्न लागे॥२१॥ यस प्रकार धर्ममार्गमा उनीहरुले आफ्नो आधा धन समाप्त गरिदिए, तैपनी उनीहरुलाई पुत्र या पुत्री कसैको पनि मुख देख्न पाएनन्। यसैले अब ती ब्राह्मण धेरै नै चिन्तातुर रहन लागे॥२२॥ एक दिन ती ब्राह्मणदेवता धेरै दुःखी भई घर निस्किएर वन तिर गए। दिउँसोको समय थियो उनलाई प्यास लाग्यो, यसैले उनी एउटा तलाउमा आए॥२३॥ सन्तानको अभावको दुःखले उनको शरीरलाई धेरै सुकाएको थियो, यसैले थकित भएर पानी पिएपछि त्यहीँ बसे। दुई घड़ी बितेको थियो कि

**दृष्ट्वा पीतजलं तं तु विप्रो यातस्तदन्तिकम्।**
**नत्वा च पादयोस्तस्य निःश्वसन् संस्थितः पुरः॥२५॥**

**यतिरुवाच**

**कथं रोदिषि विप्र त्वं का ते चिन्ता बलीयसी।**
**वद त्वं सत्वरं मह्यं स्वस्य दुःखस्य कारणम्॥२६॥**

**ब्राह्मण उवाच**

**किं ब्रवीमि ऋषे दुःखं पूर्वपापेन संचितम्।**
**मदीयाः पूर्वजास्तोयं कवोष्णमुपभुञ्जते॥२७॥**
**मद्दत्तं नैव गृह्णन्ति प्रीत्या देवा द्विजातयः।**
**प्रजादुःखेन शून्योऽहं प्राणांस्त्यक्तुमिहागतः॥२८॥**
**धिग्जीवितं प्रजाहीनं धिग्गृहं च प्रजां विना।**
**धिग्धनं चानपत्यस्य धिक्कुलं संततिं विना॥२९॥**
**पाल्यते या मया धेनुः सा वन्ध्या सर्वथा भवेत्।**
**यो मया रोपितो वृक्षः सोऽपि वन्ध्यत्वमाश्रयेत्॥३०॥**
**यत्फलं मद्गृहायातं तच्चशीघ्रं विनश्यति।**
**निर्भाग्यस्यानपत्यस्य किमतो जिवितेन मे॥३१॥**
**इत्युक्त्वा स रुरोदोच्चैस्तपार्श्वे दुःखपीडितः।**
**तदा तस्य यतेश्चित्ते करुणाभूद्गरीयसी॥३२॥**
**तद्भालाक्षरमालां च वाचयामास योगवान्।**
**सर्वं ज्ञात्वा यतिः पश्चाद्विप्रमूचे सविस्तरम्॥३३॥**

**यतिरुवाच**

**मुञ्चाज्ञानं प्रजारूपं बलिष्ठा कर्मणो गतिः।**
**विवेकं तु समासाद्य त्यज संसारवासनाम्॥३४॥**
**शृणु विप्र मया तेऽद्य प्रारब्धं तु विलोकितम्।**
**सप्तजन्मावधि तव पुत्रो नैव च नैव च॥३५॥**
**संततेः सगरो दुःखमवापाङ्गः पुरा तथा।**
**रे मुञ्चाद्य कुटुम्बाशां संन्यासे सर्वथा सुखम्॥३६॥**

त्यहाँ एक संन्यासी महात्मा आउनुभयो॥२४॥ जब ब्राह्मणदेवताले देख्नुभयो कि उहाँले जल पिईसक्नुभयो, तब आत्मदेव उहाँको नजिकै गए र चरणमा नमस्कार गरेपछि सामुन्ने उभिएर लामो–लामो सास फेर्न लागे॥२५॥ **संन्यासीले सोध्नुभयो**–भन, ब्राह्मणदेवता! किन रोईरहेको छौ? यस्तो के तिमीलाई ठूलो चिन्ता भयो? तिमी छिटो आफ्नो दुःखको कारण मलाई भन॥२६॥ **ब्राह्मणले भने**–महाराज! आफ्नो पूर्वजन्मको पापले संचित दुःखको के वर्णन गरौं? अब मेरा पितृहरू मैले दिएको जलांजलिलाई आफ्नो चिन्ताजनित साससले केही तातो गरेर पिउँदछन्॥२७॥ देवता र ब्राह्मण मैले दिएको प्रसन्न मनले स्वीकार गर्दैनन्। सन्तानको लागि म यति दुःखी भएको छु कि मलाई सबै तिर शून्य–नै–शून्य देखिन्छ। म प्राण त्याग्नको लागि यहाँ आएको हूँ॥२८॥ सन्तानहीन जीवनलाई धिक्कार छ, सन्तानहीन गृहलाई धिक्कार छ! सन्तानहीन धनलाई धिक्कार छ र सन्तानहीन कुललाई पनि धिक्कार छ!॥२९॥ म जुन गाईलाई पाल्दछु त्यो पनि सर्वथा बाँझी हुन्छे, जो बोट–बिरुवा रोप्दछु त्यसमा पनि फल–फूल लाग्दैनन्॥३०॥ मेरो घरमा जो फल आउँदछ, त्यो पनि छिटै कुहिन्छ। जब म यस्तो अभागी र पुत्रहीन छु, भने फेरि यस जीवनलाई राखेर मैले के गर्नु छ र?॥३१॥ यसरी भनेर त्यो ब्राह्मण दुःखले व्याकुल भएर ती सन्यासी महात्माको अघिल्तिर भक्कानिंदै रुन लागे। तब ती यतिवरको हृदयमा ठूलो करुणा उत्पन्न भयो॥३२॥ ती संन्यासी योगनिष्ठ थिए उनले ती ब्राह्मणको निधारको रेखा पढेर सारा वृत्तान्त जान्नुभयो र फेरि विस्तारपूर्वक भन्न लाग्नुभयो॥३३॥ **संन्यासीले भन्नुभयो**–ब्राह्मणदेवता! यस प्रजाप्राप्तिको मोह त्याग गरिदेउ। कर्मको गति प्रबल छ, विवेकको आश्रय लिएर संसारको वासना छोडिदेउ॥३४॥ विप्रवर! सुनय मैले यस समय तिम्रो प्रारब्ध देखेर निश्चय गरेको छु कि तिम्रो सात जन्म सम्म तिम्रो कुनै सन्तान कसैगरि हुँदैन॥३५॥ पूर्वकालमा राजा सगर एवं अंगलाई सन्तानको कारण दुःख भोग्नु परेको थियो। ब्राह्मण! अब तिमी कुटुम्बको आशा छोड़ि देउ। संन्यासमा नै सबै प्रकारका सुख छन्॥३६॥

### ब्राह्मण उवाच

**विवेकेन भवेत्किं मे पुत्रं देहि बलादपि।**
**नो चेत्त्यजाम्यहं प्राणांस्त्वदग्रे शोकमूर्च्छितः॥३७॥**

**पुत्रादिसुखहीनोऽयं संन्यासः शुष्क एव हि।**
**गृहस्थः सरसो लोके पुत्रपौत्रसमन्वितः॥३८॥**

**इति विप्राग्रहं दृष्ट्वा प्राब्रवीत्स तपोधनः।**
**चित्रकेतुर्गतः कष्टं विधिलेखविमार्जनात्॥३९॥**

**न यास्यसि सुखं पुत्राद्यथा दैवहतोद्यमः।**
**अतो हठेन युक्तोऽसि ह्यर्थिनं किं वदाम्यहम्॥४०॥**

**तस्याग्रहं समालोक्य फलमेकं स दत्तवान्।**
**इदं भक्षय पत्न्या त्वं ततः पुत्रो भविष्यति॥४१॥**

**सत्यं शौचं दया दानमेकभक्तं तु भोजनम्।**
**वर्षावधि स्त्रिया कार्यं तेन पुत्रोऽतिनिर्मलः॥४२॥**

**एवमुक्त्वा ययौ योगी विप्रस्तु गृहमागतः।**
**पत्न्या पाणौ फलं दत्त्वा स्वयं यातस्तु कुत्रचित्॥४३॥**

**तरुणी कुटिलातस्य सख्यग्रे च रुदोद ह।**
**अहो चिन्ताममोत्पन्ना फलं चाहं न भक्षये॥४४॥**

**फलभक्षेणः गर्भस्याद्गर्भेणोदरवृद्धिता।**
**स्वल्पभक्षं ततोऽशक्तिर्गृहकार्यं कथं भवेत्॥४५॥**

**दैवाद्धाटी व्रजेद्ग्रामे पलायेद्गर्भिणी कथम।**
**शुकवन्निवसेद्गर्भस्तं कुक्षेः कथमुत्सृजेत्॥४६॥**

**तिर्यक्चेदागतो गर्भस्तदा मे मरणं भवेत्।**
**प्रसूतौ दारुणं दुःखं सुकुमारी कथं सहे॥४७॥**

**ब्राह्मणले भने**–महात्माजी! विवेकले मेरो के हुन्छ र। मलाई त बलपूर्वक पुत्र दिनुहोस नत्र भने म हजुरको सामुन्ने नै शोक–मूर्च्छित भएर प्राण त्याग गर्नेछु॥३७॥ जसमा पुत्र–स्त्री आदिको सुख छैन, यस्तो संन्यास त सर्वथा नीरस नै हुन्छ। लोकमा सरस त पुत्र–पौत्रादिले सम्पन्न गृहस्थाश्रम नै हो॥३८॥ ब्राह्मणको यस्तो आग्रह देखेर ती तपोधनले भन्नुभयो, 'विधाताको लेखलाई मेटाउने हठ गर्नाले राजा चित्रकेतु ठूलो कष्ट भोग्नु परेको थियो॥३९॥ यसैले जसको उद्योगलाई दैवले कुल्चिन्छ, त्यस पुरुषको समान तिमीलाई पनि पुत्रबाट सुख मिल्ने छैन। तिमीले त धेरै हठ गरेर बसेको छौ र अर्थीको रूपमा तिमी मेरो सामुन्ने उपस्थित भएको छौय यस्तो दशा म के भनौ खै॥४०॥ जब महात्माजीले देख्नुभयो कि यो कसैगरी आफ्नो आग्रह छोड्दैन, तब उहाँल एउटा फल दिएर भन्नुभयो –'यसलाई तिमी आफ्नो पत्नीलाई ख्वाईदिनु, यसबाट उसको एउटा पुत्र हुनेछ॥४१॥ तिम्रो स्त्रीले पनि एकवर्ष सम्म सत्य, शौच, दया, दान र एक छाक एउटा अन्न खाने नियम राख्नु पर्नेछ। यदि उसले यसो गर्दछे भने त्यो बालक धेरै शुद्ध स्वभाववाला हुनेछ॥४२॥ यस प्रकार भनेर ती योगिराज जानुभयो र ब्राह्मण आफ्नो घर फर्किए। त्यहाँ आएर उनले त्यो फल आफ्नी स्त्रीको हातमा दिएर स्वयं कतै गए॥४३॥ उनकी स्त्री त कुटिल स्वभावकी थिई नै, त्यो रुँदै आफ्नी एक सखी सँग भन्नलागि–'सखी! मलाई त ठूलो चिन्ता भएको छ, म त यो फल खान्न॥४४॥ फल खानाले गर्भ रहन्छ र गर्भ रहेपछि पेट बढ्छ। फेरि केही खान पिउन नै सकिंदैन, यसले मेरो शक्ति क्षीण हुनजानेछ। अनि भन त घरको धंधा कसरी हुन्छ? ॥४५॥ र–दैववशात् यदि कहीं गाउँमा डाकुहरूको आक्रमण भयो भने त गर्भिणी स्त्री कसरी भाग्छे। यदि शुकदेवजीको जस्तो यो गर्भ पनि पेटमा नै बस्यो भने यसलाई बाहिर कसरी निकाल्न सकिन्छ॥४६॥ र कहीं प्रसवकालको समय त्यो टेढ़ो भयो भने त फेरि प्राणबाटै हात धुनु पर्नेछ। उसो त प्रसवको समय पनि ठूलो पीड़ा हुन्छय म सुकुमारी भला, यो कसरी सहन सक्नु? ॥४७॥

**मन्दायां मयि सर्वस्वं ननान्दा संहरेत्तदा।**
**सत्यशौचादिनियमो दुराराध्यः स दृश्यते ॥४८॥**

**लालने पालने दुःखं प्रसूतायाश्च वर्तते।**
**वन्ध्या वा विधवा नारी सुखिनी चेति मे मतिः ॥४९॥**

**एवं कुतर्कयोगेन तत्फलं नैव भक्षितम्।**
**पत्या पृष्टं फलं भुक्तं भुक्तं चेति तयेरितम् ॥५०॥**

**एकदा भगिनी तस्यास्तद्गृहं स्वेच्छयाऽऽगता।**
**तदग्रे कथितं सर्वं चिन्तेयं महती हि मे ॥५१॥**

**दुर्बला तेन दुःखेन ह्यनुजे करवाणि किम्।**
**साब्रवीन्मम गर्भोऽस्ति तं दास्यमि प्रसूतितः ॥५२॥**

**तावत्कालं स गर्भेव गुप्ता तिष्ठ गृहे सुखम्।**
**वित्तं त्वं मत्पतेर्यच्छ स ते दास्यति बालकम् ॥५३॥**

**षाण्मासिको मृतो बाल इति लोक वदिष्यति।**
**तं बालं पोषयिष्यामि नित्यमागत्य ते गृहे ॥५४॥**

**फलमर्पय धेन्वै त्वं परीक्षार्थं तु साम्प्रतम्।**
**तत्तदाचरितं सर्वं तथैव स्त्रीस्वभावतः ॥५५॥**

**अथ कालेन सा नारी प्रसूता बालकं तदा।**
**आनीय जनको बालं रहस्ये धुन्धुलीं ददौ ॥५६॥**

**तया च कथितं भर्त्रे प्रसूतः सुखमर्भकः।**
**लोकस्य सुखमुत्पन्नमात्मदेवप्रजोदयात् ॥५७॥**

**ददौ दानं द्विजातिभ्यो जतकर्म विधाय च।**
**गीतवादित्रघोषोऽभूत्तद्द्वारे मङ्गलं बहु ॥५८॥**

**भर्तुरग्रेऽब्रवीद्वाक्यं स्तन्यं नास्ति कुचे मम।**
**अन्यस्तन्येन निर्दुग्धा कथं पुष्णामि बालकम् ॥५९॥**

म जब दुर्बल हुनेछु, तब नन्द आएर घरको सबै माल–सामान जम्मा पारेर लैजान्छे। अर्को कुरो मलाई त सत्य–शौचादि नियमहरूको पालन हुन पनि कठिन जस्तै लाग्दछ ॥४८॥ जो स्त्री बच्चा जन्माउँछे, त्यसलाई त्यो बच्चाको लालन–पालनमा पनि ठूलो कष्ट हुन्छ। अतः मेरो विचारमा त वन्ध्या या विधवा आईमाई नै सुखी छन् ॥४९॥ मनमा यस्तै प्रकारका कुतर्क उठ्नाले उसले त्यो फल खाईन र जब उसको पतिले सोधे–'फल खायौ ?' तब उसले भनिदिई– 'अँ, खाईसकें ॥५०॥ एक दिन उसकी बहिनी अचानक त्यसको घरमा आईय तब उसले आफ्नी बहिनीलाई सारा वृत्तान्त सुनाएर भनि कि 'मेरो मनमा यसको ठूलो चिन्ता छ ॥५१॥ म यस दुःखको कारण दिन–दिनै दुब्लो हुँदै गईरहेकी छु। त्यसैले बहिनी म के गरौं ?' बहिनीले भनि, 'मेरो पेटमा बच्चा छ, प्रसव भएपछि त्यो बालक म तपाईलाई दिन्छु ॥५२॥ तबसम्म तपाई गर्भवतीको समान घरमा नै गुप्तरूपले सुख सँग बस्नु। तपाई मेरो पतिलाई केही धन दिनुहुन्छ भने उनले आफ्नो बालक दिन्छन् ॥५३॥ (म यस्तो युक्ति गर्नेछु) कि जसमा सबैजना यही भन्नेछन् कि 'यसको बालक छः महीनाको भएर मर्‍यो र म नित्यप्रति तपाईको घरमा आएर त्यस बालकको पालन–पोषण गरिरहने छु ॥५४॥ तिमी यस समय यसको जाँच गर्नको लागि यो फल गाईलाई ख्वाईदिनु।' ब्राह्मणीले स्त्रीस्वभाववश जो–जो उसकी बहिनीले भनेकी थिई, त्यसरी नै सबै गरि ॥५५॥ यस पश्चात् समयानुसार जब त्यस स्त्रीको पुत्र भयो, तब उसको पिताले चुपचाप ल्याएर बालक धुन्धुली दियो ॥५६॥ र धुन्धुलीले आत्मदेवलाई सूचना दिई कि मेरो सुखपूर्वक बालक जन्मिएको छ। यस प्रकार आत्मदेवको पुत्र भयो। यो सुनेर सबै गाँउलेहरूलाई धेरै आनन्द भयो ॥५७॥ ब्राह्मणले त्यसको जातकर्म–संस्कार गरेर ब्राह्मणहरूलाई दान दिए र उनको घरमा गाना–बजाना तथा अनेक प्रकारका मांगलिककृत्य हुन लागे ॥५८॥ धुन्धुलीले आफ्नो पति सँग भनि कि, 'मेरो स्तनमा त दूध नै छैनय फेरि गाई आदि कुनै अन्य जीवको दुधले म यस बालकको कसरी पालन गरौं ? ॥५९॥

**मत्स्वसुश्च प्रसूताया मृतो बालस्तु वर्तते।**
**तामाकार्य गृहे रक्ष सा तेऽर्भं पोषयिष्यति॥६०॥**

**पतिना तत्कृतं सर्वं पुत्ररक्षणहेतवे।**
**पुत्रस्य धुन्धुकारीति नाम मात्रा प्रतिष्ठितम्॥६१॥**

**त्रिमासे निर्गते चाथ सा धेनुः सुषुवेऽभर्कम्।**
**सर्वाङ्गसुन्दरं दिव्यं निर्मलं कनकप्रभम्॥६२॥**

**दृष्ट्वा प्रसन्नो विप्रस्तु संस्कारान् स्वयमादधे।**
**मत्वाऽऽश्चर्यं जनाः सर्वे दिदृक्षार्थं समागताः॥६३॥**

**भाग्योदयोऽधुना जात आत्मदेवस्य पश्यत।**
**धेन्वा बालः प्रसूतस्तु देवरूपीति कौतुकम्॥६४॥**

**न ज्ञातं तद्रहस्यं तु केनापि विधियोगतः।**
**गोकर्णं तं सुतं दृष्ट्वा गोकर्णं नाम चाकरोत्॥६५॥**

**कियत्कालेन तौ जातौ तरुणौ तनयावुभौ।**
**गोकर्णः पण्डितो ज्ञानी धुन्धुकारी महाखलः॥६६॥**

**स्नानशौचक्रियाहीनो दुर्भक्षी क्रोधवर्धितः।**
**दुष्परिग्रहकर्ता च शवहस्तेन भोजनम्॥६७॥**

**चौरः सर्वजनद्वेषी परवेश्मप्रदीपकः।**
**लालनायार्भकान्धृत्वा सद्यः कूपे न्यपातयत्॥६८॥**

**हिंसकः शस्त्रधारी च दीनान्धानां प्रपीडकः।**
**चाण्डालाभिरतो नित्यं पाशहस्तः श्वसंगतः॥६९॥**

मेरी बहिनको हाल-सालै बालक भएको थियो, त्यो मरिसकेको छ रे, अब त्यसलाई बोलाएर यहाँ राख्ने हो भने त्यो तपाईको यस छोरोको पालन-पोषण गरिदिन्छ'॥६०॥ तब पुत्रको रक्षाको लागि आत्मदेवले त्यस्तै नै गरे तथा माता-धुन्धुलीले त्यस बालकको नाम धुन्धुकारी राखि॥६१॥ यसको पछि तीन महीना बीतेपछि त्यस गाईको पनि एक मनुष्याकार बच्चा भयो। त्यो सर्वागसुन्दर, दिव्य, निर्मल तथा सुवर्णको-जस्तो कान्तिवाला थियो॥६२॥ त्यसलाई देखेर ब्राह्मणदेवतालाई पनि बड़ो आनन्द भयो र उनले स्वयं त्यसको सबै संस्कार गरे। यस समाचारले अन्य सबैजनालाई पनि आश्चर्य भयो र बालकलाई हेर्नको लागि आए॥६३॥ तथा आपसमा भन्न लागे, हेर भाई! अब आत्मदेवको कस्तो भाग्य उदय भएको छ! कस्तो आश्चर्यको कुरा हो कि गाईको पनि यस्तो दिव्यरूप बालक उत्पन्न भएको छ॥६४॥ दैवयोगले यस गुप्त रहस्य कसैलाई पनि थाहा भएन। आत्मदेवले त्यस बालकको गाईको जस्तो कान देखेर त्यसको नाम 'गोकर्ण' राखे॥६५॥ केही समय बितेपछि दुबै बालक जवान भए। तिनीहरूमा गोकण त ठूला पण्डित र ज्ञानी भए, तर धुन्धुकारी बड़ो दुष्ट निस्किया॥६६॥ स्नान-शौचादि ब्राह्मणोचित आचारहरूको त्यसमा नाम पनि थिएर र न त खानपानको नै कुनै परहेज थियो। क्रोध त्यसलाई निकै हुन्थ्यो। त्यो नराम्रा वस्तुहरूको संग्रह गर्दथ्यो। मुर्दाको हातद्वारा छुवाईएको अन्न पनि खाने गर्थ्यो॥६७॥ अर्काको चोरी गर्नु र सबै सँग रिस-राग बढाउनु त्यसको स्वभाव बनेको थियो। लुकि-छिपी त्यो अर्काको घरमा आगो लगाईदिन्थ्यो। अर्काको बच्चालाई खेलाउनको लागि काखमा लिन्थ्यो र फुत्तै इनारमा खसालिदिन्थ्यो॥६८॥ हिंसाको त उसलाई व्यसन-जस्तो भएको थियो। हर समय त्यो अस्त्र-शस्त्र धारण गरि बस्थ्यो र बेचारा अन्धा र दीन-दुःखिहरूलाई व्यर्थैको दुःख दिन्थ्यो। चाण्डालहरू सँग उसको विशेष प्रेम थियोय बस, हातमा पाशो लिएर कुकुरहरूको टोलीको साथमा शिकारको दाउमा घुमिरहन्थ्यो॥६९॥

**तेन वेश्याकुसङ्गेन पित्र्यं वित्तं तु नाशितम्।**
**एकदा पितरौ ताड्य पात्राणि स्वयमाहरत्॥७०॥**

**तत्पिता कृपणः प्रोच्चैर्धनहीनो रुरोद ह।**
**वन्ध्यत्वं तु समीचीनं कुपुत्रो दुःखदायकः॥७१॥**

**क्व तिष्ठामि क्वगच्छामि को मे दुःखं व्यपोहयेत्।**
**प्राणांस्त्यजामि दुःखेन हा कष्टं मम संस्थितम्॥७२॥**

**तदानीं तु समागत्य गोकर्णो ज्ञानसंयुतः।**
**बोधयामास जनकं वैराग्यं परिदर्शयन्॥७३॥**

**असारः खलु संसारो दुःखरूपी विमोहकः।**
**सुतः कस्य धनं कस्य स्नेहवाञ्ज्वलतेऽनिशम्॥७४॥**

**न चेन्द्रस्य सुखं किंचिन्न सुखं चक्रवर्तिनः।**
**सुखमस्ति विरक्तस्य मुनेरकान्तजीविनः॥७५॥**

**मुञ्चाज्ञानं प्रजारूपं मोहतो नरके गतिः।**
**निपतिष्यति देहोऽयं सर्वं त्यक्त्वा वनं व्रज॥७६॥**

**तद्वाक्यं तु समाकर्ण्य गन्तुकामः पिताब्रवीत्।**
**किं कर्तव्यं वने तात तत्त्वं वद सविस्तरम्॥७७॥**

**अन्धकूपे स्नेहपाशे बद्धः पङ्गुरहं शठः।**
**कर्मणा पतितो नूनं मामुद्धर दयानिधे॥७८॥**

**गोकर्ण उवाच**

**देहेऽस्थिमांसरुधिरेऽभिमतिं त्यज त्वं**
**जायासुतादिषु सदा ममतां विमुञ्च।**
**पश्यानिशं जगदिदं क्षणभङ्गनिष्ठं**
**वैराग्यरागरसिको भव भक्तिनिष्ठः॥७९॥**

वेश्याहरूको जालमा फँसेर उसले आफ्नो पिताको सारा सम्पत्ति नष्ट गरिदियो। एक दिन माता–पितासँग मार–पीट गरेर घरको सबै भाँडा–बर्तन उठाई लिएर गयो॥७०॥ यस प्रकार जब सारा सम्पत्ति स्वाहा भयो, तब उसको कृपण पिता डाँको हालेर रुँदै भन्नथाले–'यस्तो भन्दा त यसको आमा बाँझी नै बसेको भए राम्रो हुन्थ्यो; कुपुत्र त धेरै दुःखदायी हुनेगर्छ॥७१॥ अब म कहाँ बसौं? कहाँ जाऊँ? मेरो यस संकटलाई कसले काटिदेला? हाय! म माथि त ठूलो विपत्ति आईलागेको छ, यस दुःखको कारण अवश्य मैले एकदिन प्राण त्याग गर्नुपर्नेछ॥७२॥ त्यसै समय परम ज्ञानी गोकर्णजी त्यहाँ आउनुभयो र उहाँले पिताजीलाई वैराग्यको उपदेश गर्दै धेरै सम्झाउनु भयो॥७३॥ गोकर्णले भन्नुभयो– पिताजी! यो संसार असार छ। यो अत्यन्त दुःखरूप र मोहम पारिदिनेवाला हो। पुत्र कसको? धन कसको? स्नेहवान् पुरुष रात–दिन दीपकको समान जलिरहन्छ॥७४॥ सुख न त इन्द्रलाई छ न चक्रवर्ती राजालाई नै सुख छ त केवल विरक्त, एकान्तजीवी मुनिलाई॥७५॥ 'यो मेरो पुत्र हो' यस अज्ञानलाई छोड़िदिनुहोस। मोहले नरकको प्राप्ति हुन्छ। यो शरीर त नष्ट हुन्छ नै। यसैले सबैथोक छोडेर वनमा जानुहोस॥७६॥गोकर्णको वचन सुनेर आत्मदेव वनमा जानको लागि तयार भए र गोकर्णसँग भन्नलागे, 'हे पुत्र! वनमा रहेर मैले के गर्नुपर्दछ, यो सबै मलाई विस्तारपूर्वक भन॥७७॥ म बड़ो मूर्ख छु, अबसम्म कर्मवश स्नेह–पाशमा बाँधिएको अपांगको भाँति यस घररूप अँध्यारो कुवामा नै परेको छु। तिमी धेरै दयालु छौ, यसबाट मेरो उद्धार गर'॥७८॥

**गोकर्णले भने**–पिताजी! यो शरीर हड्डी, मासु र रगतको पिण्ड होय यसलाई तपाई 'म' मान्न छोडिदिनुहोस र स्त्री–पुत्रादिलाई 'आफ्ना' कहिल्यै नमान्नु होस। यस संसारलाई रात–दिन क्षणभंगुर देख्नुहोस, यसको कुनै पनि वस्तुलाई स्थायी संझेर त्यसमा राग नगर्नुहोस। बस, एकमात्र वैराग्य–रसको रसिक भएर भगवान्को भक्तिमा लागिरहनु होस॥७९॥

**धर्मं भजस्व सततं त्यज लोकधर्मान्**
**सेवस्व साधुपुरुषाञ्जहि कामतृष्णाम्।**
**अन्यस्य दोषगुणचिन्तनमाशु मुक्त्वा**
**सेवाकथारसमहो नितरां पिब त्वम्॥८०॥**

भगवद्भजन नै सबभन्दा ठूलो धर्म हो, निरन्तर त्यसैको आश्रय लिईराख्नुहोस। अन्य सबै प्रकारका लौकिक धर्महरूबाट मुख मोड्नुहोस। सदा साधुजनहरूको सेवा गर्नुहोस। भोगहरूको लालसालाई नजिक पनि आउन नदिनुहोस तथा छिटो-भन्दा-छिटो अर्काको गुण-दोषहरूको विचार गर्न छोडेर एकमात्र भगवत्सेवा र भगवान्को कथाको रस नै पान गर्नुहोस॥८०॥ यस प्रकार पुत्रको वाणीले प्रभावित भएर आत्मदेवले घर छोड़िदिए र वनको यात्रा गरे। यद्यपि उनको आयु त्यस समय साठी वर्षको भईसकेको थियो, फेरि पनि बुद्धिमा पूरा-का-पूरा दृढ़ता थियो। त्यहाँ रात दिन भगवान्को सेवा-पूजा गर्नाले र नियमपूर्वक भागवतको दशमस्कन्धको पाठ गर्नाले उनले भगवान् श्रीकृष्णचन्द्रको प्राप्त गरे॥८१॥

**एवं सुतोक्तिवशतोऽपि गृहं विहाय**
**यातो वनं स्थिरमतिर्गतषष्टिवर्षः।**
**युक्तो हरेरनुदिनं परिचर्ययासौ**
**श्रीकृष्णमाप नियतं दशमस्य पाठात्॥८१॥**

**इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमहात्म्ये विप्रमोक्षो नाम चतुर्थोऽध्यायः॥४॥**

-★-

# अथ पञ्चमोऽध्यायः

## गोकर्णद्वारा प्रेत बनेको धुन्धुकारीको उद्धार

सूत उवाच

**पितर्युपरते तेन जननी ताडिता भृशम्।**
**क्व वित्तं तिष्ठति ब्रुहि हनिष्ये लत्तया न चेत्॥१॥**

**इति तद्वाक्यसंत्रासाज्जनन्या पुत्रदुःखतः।**
**कूपे पातः कृतो रात्रौ तेन सा निधनं गता॥२॥**

**गोकर्णस्तीर्थयात्रार्थं निर्गतो योगसंस्थितः।**
**न दुःखं न सुखं तस्य न वैरी नापि बान्धव॥३॥**

**धुन्धुकारी गृहेऽतिष्ठत्पञ्चपण्यवधूवृतः।**
**अत्युग्रकर्मकर्ता च तत्पोषणविमूढधीः॥४॥**

**सूतजी भन्नुहुन्छ**- शौनकजी! पिता वन गईसकेपछि एकदिन धुन्धुकारीले आफ्नी आमालाई धेरै पीट्यो र भन्यो- भन! धन कहाँ राखेको छय होईनभने अहिले यही अगुल्टोले तेरो खबर लिन्छु॥१॥ त्यसको यस धमकीबाट डराएर र पुत्रको उपद्रवहरुबाट दुःखी भएर त्यो रातको समयमा ईनारमा गएर हाम्फाली यसैबाट त्यसको मृत्यु भयो॥२॥ योगनिष्ठ गोकर्णजी तीर्थ-यात्राको लागि निस्किनु भयो। उहाँलाई यी घटनाहरुले कुनै सुख या दुःख हुँदैन थियोय किनकी उनको न कोही मित्र थियो न शत्रु॥३॥ धुन्धुकारी पाँच वेश्याहरुका साथमा घरमा रहन लाग्यो। तिनीहरूलाई भोग-सामग्री जुटाने चिन्ताले त्यसको बुद्धि नष्ट गरिदियो र त्यो नाना प्रकारका अत्यन्त क्रूर कर्म गर्न थाल्यो॥४॥

**एकदा कुलटास्तास्तु भूषणान्यभिलिप्सवः।**
**तदर्थं निर्गतो गेहात्कामान्धो मृत्युमस्मरन्॥५॥**

**यतस्ततश्च संहृत्य वित्तं वेश्म पुनर्गतः।**
**ताभ्योऽयच्छत्सुवस्त्राणि भूषणानि कियन्ति च॥६॥**

**बहुवित्तचयं दृष्ट्वा रात्रौ नार्यो व्यचारयन्।**
**चौर्यं करोत्यसौ नित्यमतो राजा ग्रहीष्यति॥७॥**

**वित्तं हृत्वा पुनश्चैनं मारयिष्यति निश्चितम्।**
**अतोऽर्थगुप्तये गूढमस्माभिः किं न हन्यते॥८॥**

**निहत्यैनं गृहीत्वार्थं यास्यामो यत्र कुत्रचित्।**
**इति निश्चियं कृत्वा सुप्तं सम्बद्ध्य रश्मिभिः॥९॥**

**पाशं कण्ठे निधायास्य तन्मृत्युमुपचक्रमुः।**
**त्वरितं न ममारासौ चिन्तायुक्तास्तदाभवन्॥१०॥**

**तप्ताङ्गारसमूहांश्च तन्मुखे हि विचिक्षिपुः।**
**अग्निज्वालातिदुःखेन व्याकुलो निधनं गतः॥११॥**

**तं देहं मुमुचुर्गर्ते प्रायः साहसिकाः स्त्रियः।**
**न ज्ञातं तद्रहस्यं तु केनापीदं तथैव च॥१२॥**

**लोकैः पृष्टा वदन्ति स्म दूरं यातः प्रियो हि नः।**
**आगमिष्यति वर्षेऽस्मिन् वित्तलोभविकर्षितः॥१३॥**

**स्त्रीणां नैव तु विश्वासं दुष्टानां कारयेद्बुधः।**
**विश्वासो यः स्थितो मूढः स दुःखै परिभूयते॥१४॥**

**सुधामयं वचो यासां कामिनां रसवर्धनम्।**
**हृदयं क्षुरधाराभं प्रियः को नाम योषिताम्॥१५॥**

**संहृत्य वित्तं ता याताः कुलटा बहुभर्तृकाः।**
**धुन्धुकारी बभूवाथ महान् प्रेतः कुकर्मतः॥१६॥**

एक दिन ती कुलटाहरुले धुन्धुकारी सँग धेरै गर–गहना माँगे। त्यो त कामले अंधो भएको थियो मृत्युको त्यसलाई कहिले यादै आउँदैन थियो। बस, ती चीजबीजहरु जुटाउनको लागि त्यो घरबाट निस्कियो॥५॥ त्यसले जहाँ–तहाँबाट धेरै धन चोरेर घर फर्किएर आयो तथा तिनीहरूलाई केही सुन्दर वस्त्र र आभूषण ल्याएर दियो॥६॥ चोरीको धेरै माल देखेर रातको समय ती वेश्याहरुले विचार विचार गरे कि 'यो नित्य नै चोरी गर्दछ, यसैले यसलाई कुनै दिन अवश्य राजाका मान्छे पक्रेर लैजान्छन् ॥७॥ राजा यो सारा धन छिनेर यसलाई निश्चय नै प्राणदण्ड दिनेछन्। जब एक दिन यसले मर्नु नै छ, भने हामीले नै किन यसलाई धनको रक्षाको लागि गुप्तरूपले नमार्ने॥८॥ यसलाई मारेर हामी यसको माल–मत्ता लिएर जहाँ–कहीं पनि जाउँला। यस्तो निश्चय गरेर उनीहरुले सुतिरहेको धुन्धुकारीलाई रस्सिले कसेर बाँधिदिए र त्यसको गलामा फाँसी लगाएर त्यसलाई मार्ने प्रयत्न गरे। यसले पनि जब उ छिटो मरेन, तब उनीहरुलाई ठूलो चिन्ता भयो ॥९–१०॥ तब उनीहरुले त्यसको मुखमा बल्दै गरेको आगोका फिलिङ्गाहरु हालिदिए; यसले त्यो आगोको लपटाले अत्यन्त छटपटाएर मर्‍यो॥११॥ तिनीहरूले त्यसको शरीरलाई एउटा खाल्टोमा हालेर पुरिदिए। साँच्चै हो, स्त्रिहरू प्रायः धेरै दुःसाहसी हुन्छन्। उनीहरूको यस त्य कसैलाई थाहा भएन॥१२॥ मान्छेहरूले सोधे भने भनिदिन्थे कि 'हाम्रा प्रियतम पैसाको लोभले यो पल्ट धेरै टाढा जानुभएको छ, यसै वर्ष भित्र आईपुग्नुहुन्छ'॥१३॥ बुद्धिमान् पुरुषले दुष्टा स्त्रिहरूको कहिल्यै विश्वास गर्नुहुँदैन। जो मूर्ख यिनीहरूको विश्वास गर्दछ, त्यसले दुःखी हुनुपर्दछ॥१४॥ यिनीहरूको बोली त अमृतको समान कामीहरूको हृदयमा रसको संचार गर्दछ; तर हृदय छुराको धारको समान तीक्ष्ण हुन्छ। भला, यी स्त्रिहरूको को प्यारो हुन्छ र?॥१५॥ ती कुलटाहरू धुन्धुकारीको सारा सम्पत्ति समेटेर त्यहाँ चंपत भए; उनीहरूको यस्ता न जाने कति पतिहरू थिए। र धुन्धुकारी आफ्नो कुकर्महरूको कारण भयंकर प्रेत भयो॥१६॥

**वात्यारूपधरो नित्यं धावन्दशदिशोऽन्तरम्।**
**शीतातपपरिक्लिष्टो निराहारः पिपासितः ॥१७॥**
**न लेभे शरणं क्वापि हा दैवेति मुहुर्वदन्।**
**कियत्कालेन गोकर्णो मृतं लोकादबुध्यत॥१८॥**
**अनाथं तं विदित्वैव गयाश्राद्धमचीकरत्।**
**यस्मिंस्तीर्थे तु संयाति तत्र श्राद्धमवर्तयत्॥१९॥**
**एवं भ्रमन् स गोकर्णः स्वपुरं समुपेयिवान्।**
**रात्रौ गृहाङ्गणे स्वप्तुमागतोऽलक्षितः परैः॥२०॥**
**तत्र सुप्तं स विज्ञाय धुन्धुकारी स्वबान्धवम्।**
**निशीथे दर्शयामास महारौद्रतरं वपुः॥२१॥**
**सकृन्मेषः सकृद्धस्ति सकृच्च महिषोऽभवत्।**
**सकृदिन्द्रः सकृच्चाग्निः पुनश्च पुरुषोऽभवत्॥२२॥**
**वैपरीत्यमिदं दृष्ट्वा गोकर्णो धैर्यसंयुतः।**
**अयं दुर्गतिकः कोऽपि निश्चित्याथ तमब्रवीत्॥२३॥**

**गोकर्ण उवाच**

**कस्त्वमुग्रतरो रात्रौ कुतो यातो दशामिमाम्।**
**किं वा प्रेतः पिशाचो वा राक्षसोऽसीति शंस नः॥२४॥**

**सूत उवाच**

**एवं पृष्टस्तदा तेन रुरोदोच्चैः पुनः पुनः।**
**अशक्तो वचनोच्चारे संज्ञामात्रं चकार ह॥२५॥**
**ततोऽञ्जलौ जलं कृत्वा गोकर्णतमुदैरयत्।**
**तत्सेकहतपापोऽसौ प्रवक्तुमुपचक्रमे॥२६॥**

**प्रेत उवाच**

**अहं भ्राता त्वदीयोऽस्मि धुन्धुकारीति नामतः।**
**स्वकीये नैव दोषेण ब्रह्मत्वं नाशितं मया॥२७॥**
**कर्मणो नास्ति संख्या मे महाज्ञाने विवर्तिनः।**
**लोकानां हिंसकः सोऽहं स्त्रीभिर्दुःखेन मारित॥२८॥**

त्यो आँधिको रूपमा सर्वदा दशै दिशाहरूमा भौंतारिई रहन्थ्यो तथा शीत–घामले सन्तप्त र भोक–प्यासले व्याकुल भएको कारण 'हा दैव! हा दैव!' भनेर चिच्याई रहन्थ्यो। परन्तु उसलाई कहीं पनि कुनै आश्रय मिलेन। केही समय बितेपछि गोकर्णले पनि मान्छेहरूको मुखबाट धुन्धुकारीको मृत्युको समाचार सुन्नुभयो॥१७–१८॥ तब उसलाई अनाथ संझेर उहाँले त्यसको गयाजीमा श्राद्ध गर्नुभयो र जहाँ–जहाँ उहाँ जानुहुन्थ्यो, त्यसको श्राद्ध अवश्य गर्नुहुन्थ्यो॥१९॥ यस प्रकार घुम्दै–घुम्दै गोकर्णजी आफ्नो नगरमा आउनुभयो र रातको समय भएकोले अरुको दृष्टिबाट बचेर सीधै आफ्नो घरको आँगनमा सुत्नको लागि आईपुग्नुभयो॥२०॥ त्यहाँ आफ्नो भाईलाई सुतेको देखेर आधीरातको समय धुन्धुकारीले आफ्नो बड़ो विकट रूप देखायो॥२१॥ उ कहिले भेड़ा, कहिले हात्ती, कहिले राँगो, कहिले इन्द्र र कहिले अग्निको रूप धारण गर्दथ्यो। अन्तमा त्यो मनुष्यको आकारमा प्रकट भयो॥२२॥ यी विपरीत अवस्थाहरू देखेर गोकर्णले निश्चय गर्नुभयो कि यो कुनै दुर्गतिमा परेको जीव हो। तब उहाँले त्योसँग धैर्यपूर्वक सोध्नुभयो॥२३॥

**गोकर्णले सोध्नुभयो**–तिमी को हौ? रात्रिको समय यस्तो भयानक रूप किन देखाउँदैछौ? तिम्रो यो दशा कसरी भयो? मलाई भन त सही–तिमी प्रेत हौ, पिशाच हौ अथवा कुनै राक्षस हौ?॥२४॥

**सूतजी भन्नुहुन्छ**–गोकर्णले यस प्रकार सोधेपछि बारम्बार जोर–जोरले रुन लाग्यो। त्यसमा बोल्ने शक्ति थिएन, यसैले केवल उसले संकेत मात्र गर्‍यो॥२५॥ तब गोकर्णले अंजलिमा जल लिएर त्यसलाई अभिमन्त्रित गरी त्यसमाथि छर्किदिनुभयो। यसले त्यसको पाप केही शमन भयो र त्यो यस प्रकार भन्नथाल्यो॥२६॥

**प्रेतले भन्यो**–'म तिम्रो दाजु हूँ। मेरो नाम हो धुन्धुकारी। मैले आफ्नै दोषको कारण आफ्नो ब्राह्मणत्व नष्ट गरिदिएं॥२७॥ मेरा कुकर्मको गिन्ती नै गर्न सकिंदैन। म त महान् अज्ञानमा चक्कर काटिरहेको थिएं। यसैले मैले मान्छेहरूलाई दुःख दिएं। अन्त्यमा कुलटा स्त्रिहरूले मलाई तड़पाई–तड़पाई मारे॥२८॥

**अतः प्रेतत्वमापन्नो दुर्दशां च वहाम्यहम्।**
**वाताहारेण जीवामि दैवाधीनफलोदयात्॥२९॥**
**अहो बन्धो कृपासिन्धो भ्रातर्मामाशु मोचय।**
**गोकर्णो वचनं श्रुत्वा तस्मै वाक्यमथाब्रवीत्॥३०॥**

**गोकर्ण उवाच**

**त्वदर्थं तु गयापिण्डो मया दत्तो विधानतः।**
**तत्कथं नैव मुक्तोऽसि ममाश्चर्यमिदं महत्॥३१॥**
**गयाश्राद्धान्न मुक्तिश्चेदुपायो नापरस्त्विह।**
**किं विधेयं मया प्रेत तत्त्व वद सविस्तरम्॥३२॥**

**प्रेत उवाच**

**गयाश्राद्धशतेनापि मुक्तिर्मे न भविष्यति।**
**उपायमपरं कंचित्त्वं विचारय साम्प्रतम्॥३३॥**
**इति तद्वाक्यमाकर्ण्य गोकर्णो विस्मयं गतः।**
**शतश्राद्धैर्न मुक्तिश्चेदसाध्यं मोचनं तव॥३४॥**
**इदानीं तु निजं स्थानमातिष्ठ प्रेत निर्भयः।**
**त्वन्मुक्तिसाधकं किंचिदाचरिष्यं विचार्य च॥३५॥**
**धुन्धुकारी निजस्थानं तेनादिष्टस्ततो गतः।**
**गोकर्णश्चिन्तयामास तां रात्रिं न तदध्यगात्॥३६॥**
**प्रातस्तमागतं दृष्ट्वा लोकाः प्रीत्या समागताः।**
**तत्सर्वं कथितं तेन यज्ञातं च यथा निशि॥३७॥**
**विद्वांसो योगनिष्ठाश्च ज्ञानिनो ब्रह्मवादिनः।**
**तन्मुक्तिं नैव तेऽपश्यन् पश्यन्तः शास्त्रसंचयान्॥३८॥**
**ततः सर्वैः सूर्यवाक्यं तन्मुक्तौ स्तापितं परम्।**
**गोकर्णः स्तम्भनं चक्रे सूर्यवेगस्य वै तदा॥३९॥**
**तुभ्यं नमो जगत्साक्षिन् ब्रूहि मे मुक्तिहेतुकम्।**
**तच्छुत्वा दूरतः सूर्यः स्फुटमित्यभ्यभाषत॥४०॥**

यसैले अब प्रेत–योनिमा परेर यो दुर्दशा भोगिरहेको छु। अब दैववश कर्मफलको उदय हुनाले म केवल वायुभक्षण गरेर बाँचिरहेको छु॥२९॥ भाई! तिमी दयाको समुद्र छौ अब कसैगरी छिटै मलाई यो योनिबाट छुटाईदेउ। गोकर्णले धुन्धुकारीको सारा कुरा सुन्नुभयो र तब उसलाई भन्नुभयो॥३०॥

**गोकर्णले भन्नुभयो**–भाई! मलाई यो कुराको ठूलो आश्चर्य भईरहेको छ कि–मैले तिम्रो लागि विधिपूर्वक गयाजीमा पिण्डदान गरें, फेरि पनि तिमी प्रेतयोनिबाट मुक्त किन भएनौ? ॥३१॥ यदि गया–श्राद्धबाट पनि तिम्रो मुक्ति भएन भने तब यसको अरु कुनै उपाय नै छैन। ठिकै छ, तिमी सबैकुरा खोलेर भन– मैले अब के गर्नुपर्दछ? ॥३२॥

**प्रेतले भन्यो**–मेरो मुक्ति सैकड़ौं गया–श्राद्ध गरेपनि हुन सक्दैन। अब त तिमी यसको कुनै अरु उपाय सोच॥३३॥ प्रेतको यो कुरा सुनेर गोकर्णलाई बड़ो आश्चर्य भयो। उहाँ भन्नलाग्नुभयो– 'यदि सैकड़ौं गया श्राद्धले पनि तिम्रो मुक्ति भएन भने त तिम्रो मुक्ति असम्भव नै छ॥३४॥ ठिकै छ, अहिले त तिमी निर्भय भएर आफ्नो स्थानमा बसय म विचार गरेर तिम्रो मुक्तिको लागि कुनै दोस्रो उपाय गर्दछु॥३५॥ गोकर्णकी आज्ञा पाएर धुन्धुकारी त्यहाँबाट आफ्नो स्थानमा गयो। यता गोकर्णले रातभरि विचार गर्नुभयो, तब पनि उहाँलाई केही पनि उपाय आएन॥३६॥ प्रातःकाल उहाँलाई आएको देखेर मान्छेहरू प्रेमपूर्वक भेट गर्न आए। तब गोकर्णले रातमा जतिपनि जसी भएको थियो, त्यो सबै सुनाउनु भयो॥३७॥ उनीहरूमा जो मान्छे विद्वान्, योगनिष्ठ, ज्ञानी र वेदज्ञ थिए, उनीहरूले पनि अनेकौं शास्त्रहरूलाई ओल्टाई–पल्टाई गरेर हेरेय तैपनि उसको मुक्तिको कुनै उपाय भेटिएन॥३८॥ तब सबैले यही निश्चय गरे कि यस विषयमा सूर्यनारायण जुन आज्ञा गर्नुहुन्छ, त्यही गर्नुपर्दछ। अतः गोकर्णले आफ्नो तपोबलले सूर्यको गतिलाई रोकिदिनु भयो॥३९॥ उहाँले स्तुति गर्नुभयो कि–'भगवन्! हजुर सारा संसारको साक्षी हुनुहुन्छ, म हजुरलाई नमस्कार गर्दछु। हजुर मलाई पा गरेर धुन्धुकारीको मुक्तिको साधन बताउनु होस।'

**श्रीमद्भागवतान्मुक्तिः सप्ताह वाचनं कुरु।**

**इति सूर्यवचः सर्वैर्धर्मरूपं तु विश्रुतम्॥४१॥**

**सर्वेऽब्रुवन् प्रयत्नेन कर्तव्यं सुकरं त्विदम्।**

**गोकर्णो निश्चयं कृत्वा वाचनार्थं प्रवर्तितः॥४२॥**

**तत्र संश्रवणार्थाय देशग्रामाज्जना ययुः।**

**पङ्ग्वन्धवृद्धमन्दाश्च तेऽपि पापक्षयाय वै॥४३॥**

**समाजस्तु महाञ्जातो देवविस्मय कारकः।**

**यदैवासनमास्थाय गोकर्णोऽकथयत्कथाम्॥४४॥**

**स प्रेतोऽपि तदाऽऽयातः स्थानं पश्यन्नितस्ततः।**

**सप्तग्रन्थियुतं तत्रापश्यत्कीचकमुच्छ्रितम्॥४५॥**

**तन्मूलच्छिद्रमाविश्य श्रवणार्थं स्थितो ह्यसौ।**

**वातरूपी स्थितिं कतुमशक्तो वंशमाविशत्॥४६॥**

**वैष्णवं ब्राह्मणं मुख्यं श्रोतारं परिकल्प्य सः।**

**प्रथमस्कन्धतः स्पष्टमाख्यानं धेनुजोऽकरोत्॥४७॥**

**दिनान्ते रक्षिता गाथा तदा चित्रं बभूव ह।**

**वंशैकग्रन्थिभेदोऽभूत्सशब्दं पश्यतां सताम्॥४८॥**

**द्वितीयेऽह्नि तथा सायं द्वितीयग्रन्थिभेदनम्।**

**तृतीयेऽह्नि तथा सायं तृतीयग्रन्थिभेदनम्॥४९॥**

**एवं सप्तदिनैश्चैव सप्तग्रन्थिविभेदनम्।**

**कृत्वा स द्वादशस्कन्धश्रवणात्प्रेततां जहौ॥५०॥**

**दिव्यरूपधरो जातस्तुलसीदाममण्डितः।**

**पीतवासा घनश्यामो मुकुटी कुण्डलान्वितः॥५१॥**

**ननाम भ्रातरं सद्यो गोकणमिति चाब्रवीत्।**

**त्वयाहं मोचितो बन्धो कृपया प्रेतकश्मलात्॥५२॥**

गोकर्णको यो प्रार्थना सुनेर सूर्यदेवले परैबाट स्पष्ट शब्दमा भन्नुभयो–'श्रीमद्भागवतबाट मुक्ति हुन्छ, यसैले तिमी यसको सप्ताह–पारायण गर।' सूर्यको यो धर्ममय वचन त्यहाँ सबैले सुने॥४०–४१॥ तब सबैले यही भने कि 'प्रयत्नपूर्वक यही गर, छ पनि यो साधन धेरै सरल।' अतः गोकर्णजी पनि तदनुसार निश्चय गरेर कथा सुनाउनको लागि तयार हुनुभयो॥४२॥ अनेकौ देश र गाउँहरूबाट अनेकौ मान्छेहरू कथा सुन्नको लागि त्यहाँ आए। अनेक किसीमका लँगड़ा–लूल, अंधा, बूढ़ा र मन्दबुद्धि पुरुष पनि आफ्ना पापहरूको निवृत्तिको उद्देश्यले त्यहाँ आईपुगे॥४३॥ यस प्रकार त्यहाँ यति भीड़ भयो कि त्यो देखेर देवताहरूलाई पनि आश्चर्य हुन्थ्यो। जब गोकर्णजी व्यासगद्दीमा बसेर कथा भन्न थाल्नुभयो, तब त्यो प्रेत पनि त्यहाँ आयो र बस्नको लागि यता–उता ठाउँ खोज्न लाग्यो। यति मै उसको दृष्टि एउटा सीधा राखिएको सात गाँठा भएको बाँसमा पर्‍यो॥४४–४५॥ त्यसको तलको प्वालमा छिरेर त्यो कथा सुन्नको लागि बस्यो। वायुरूप भएको कारण त्यो बाहिर कतै बस्न सक्दैन थियो, यसैले बाँसमा छिर्‍यो॥४६॥ गोकर्णजीले एकजना वैष्णव ब्राह्मणलाई मुख्य श्रोता बनाउनु भयो र प्रथमस्कन्ध देखि नै स्पष्ट स्वरमा कथा सुनाउन आरम्भ गर्नुभयो॥४७॥ सन्ध्याकालमा जब कथालाई विश्राम दिईयो, तब एक बड़ो विचित्रको घटना घट्यो। त्यहाँ सभासदहरूले हेर्दा–हेर्दै त्यस बाँसको एउटा गाँठो चट–चट शब्द गर्दै फुट्यो॥४८॥ यसैप्रकार दोस्रो दिन पनि सन्ध्याकालमा दोस्रो गाँठो फुट्यो र तेस्रो दिन त्यसै समयमा तेस्रो॥४९॥ यस प्रकार सात दिनमा सातै गाँठाहरूलाई फुटाएर धुन्धुकारी बाह्र स्कन्धलाई सुनेर पवित्र भई प्रेतयोनिबाट मुक्त भयो र दिव्यरूप धारण गरेर सबैको सामुन्ने प्रकट भयो। त्यसको मेघको समान श्याम शरीर पीताम्बर र तुलसीको मालाहरूले सुशोभित थियो तथा शिरमा मनोहर मुकुट र कानमा कमनीय कुण्डल झिलमिलाई रहेका थिए॥५०–५१॥ उसले तुरुन्त आफ्नो भाई गोकर्णलाई प्रणाम गरेर भन्यो– 'भाई! तिमीले पागरेर मलाई प्रेतयोनिको यातनाहरूबाट मुक्त गरिदियौ॥५२॥

**धन्याभागवती वार्ता प्रेतपीडाविनाशिनी।**
**सप्ताहोऽपि तथा धन्यः कृष्णलोकफलप्रदः ॥५३॥**

**कम्पन्ते सर्वपापानि सप्ताहश्रवणे स्थिते।**
**अस्माकं प्रलयं सद्यः कथा चेयं करिष्यति ॥५४॥**

**आर्द्रं शुष्कं लघु स्थूलं वाङ्मनः कर्मभिः कृतम्।**
**श्रवणं विदहेत्पापं पावकः समिधो यथा ॥५५॥**

**अस्मिन् वै भारते वर्षे सूरिभिर्देवसंसदि।**
**अकथाश्राविणां पुंसां निष्फलं जन्म कीर्तितम् ॥५६॥**

**किं मोहतो रक्षितेन सुपुष्टेन बलीयसा।**
**अध्रुवेण शरीरेण शुकशास्त्रकथां विना ॥५७॥**

**अस्थिस्तम्भं स्नायुबद्धं मांसशोणितलेपितम्।**
**चर्मावनद्धं दुर्गन्धं पात्रं मूत्रपुरीषयोः ॥५८॥**

**जराशोकविपाकार्तं रोगमन्दिरमातुरम्।**
**दुष्पुरं दुर्धरं दुष्टं सदोषं क्षणभङ्गुरम् ॥५९॥**

**कृमिविड्भस्मसंज्ञान्तं शरीरमिति वर्णितम्।**
**अस्थिरेण स्थिरं कर्म कुतोऽयं साधयेन्न हि ॥६०॥**

**यत्प्रातः संस्कृतं चान्नं सायं तच्च विनश्यति।**
**तदीयरससम्पुष्टे काये का नाम नित्यदा ॥६१॥**

**सप्ताहश्रवणाल्लोके प्राप्यते निकटे हरिः।**
**अतो दोषनिवृत्त्यर्थमेतदेव हि साधनम् ॥६२॥**

यो प्रेतपीड़ाको नाश गर्ने श्रीमद्भागवतको कथा धन्य छ तथा श्रीकृष्णचन्द्रको धामको प्राप्ति गराउने यसको सप्ताह–पारायण पनि धन्य छ! ॥५३॥ जब सप्ताह–श्रवणको योग आउँदछ, तब सबै पाप डरले थर–थर काँप्न लाग्दछन् कि अब यो भागवतको कथा छिटै नै हाम्रो नाश गरिदिनेछ ॥५४॥ जसरी आगो चिसो–सुकेको, ठूलो–साना सबै प्रकारका काठलाई जलाईदिन्छ, त्यसरी नै यो सप्ताह–श्रवण मन, वचन र कर्मद्वारा गरिएको नयाँ–पुराना, ठूला–साना सबै प्रकारका पापहरूलाई भस्म गरिदिन्छ ॥५५॥ विद्वानहरूले देवताहरूको सभामा भनेका छन् कि जो यस भारतवर्षमा श्रीमद्भागवतको कथा सुन्दैनन्, तिनीहरूको जन्म वृथा नै हो ॥५६॥ भला, मोहपूर्वक लालन–पालन गरेर यदि यस अनित्य शरीरलाई हृष्ट–पुष्ट र बलवान् बनाईयो भने पनि त श्रीमद्भागवतको कथा नसुने यसले के लाभ भयो र? ॥५७॥ अस्थिहरू नै यस शरीरको आधारस्तम्भ हो, नस–नाडीरूप रस्सिहरूले यो बाँधिएको छ, माथिबाट यसमा मांस र रक्त थोपरेर यसलाई छालाले बेरिएको छ। यसको प्रत्येक अंगमा दुर्गन्ध आउँदछ। किनकी हो नै यो मलमूत्रको भाण्ड ॥५८॥ वृद्धावस्था र शोकको कारण यो परिणाममा दुःखमय नै छ, रोगहरूको त घर नै ठहरियो। यो निरन्तर कुनै–न–कुनै कामनाले पीडित रहन्छ, कहिले पनि यसको तृप्ति हुँदैन। यसलाई धारण गरिराख्नु पनि एकप्रकारले भार नै होय यसको रोम–रोममा दोष भरिएको छन् र नष्ट हुनमा यसलाई एकछिन पनि लाग्दैन ॥५९॥ अन्तमा यदि यसलाई गाडिदिने हो भने त यसमा कीरा पर्छन्य कुनै पशुले खान्छन् भने यो विष्ठा हुनजान्छ र आगोमा जलाई दिए खरानीको ढेरी हुन्छ। यसैले यसको तीन मात्र गति बताईएको छ। यस्तो अस्थिर शरीरबाट मनुष्य अविनाशी फल दिने काम किन गर्दैन? ॥६०॥ जुन अन्न प्रातःकाल पकाईन्छ, त्यो साँझसम्म मा बिग्रिन्छय फेरि त्यसैको रसले पुष्ट भएको शरीरको नित्यता कसरी हुन्छ र ॥६१॥ यस लोकमा सप्ताहश्रवण गर्नाले नै भगवानको शीघ्र प्राप्ति हुनसक्दछ। अतः सबै प्रकारको दोषहरूको निवृत्तिको लागि एकमात्र यही साधन छ ॥६२॥

**बुद्बुदा इव तोयेषु मशका इव जन्तुषु।**
**जायन्ते मरणायैव कथाश्रवणवर्जिताः॥६३॥**

**जडस्य शुष्कवंशस्य यत्र ग्रन्थिविभेदनम्।**
**चित्रं किमु तदा चित्तग्रन्थिभेदः कथाश्रवात्॥६४॥**

**भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।**
**क्षीयन्ते चास्य कर्माणि सप्ताहश्रवणे कृते॥६५॥**

**संसारकर्दमालेपप्रक्षालनपटीयसि।**
**कथातीर्थे स्थिते चित्ते मुक्तिरेव बुधैः स्मृता॥६६॥**

**एवं ब्रुवति वै तस्मिन् विमानमागमत्तदा।**
**वैकुण्ठवासिभिर्युक्तं प्रस्फुरद्दीप्तिमण्डलम्॥६७॥**

**सर्वेषां पश्यतां भेजे विमानं धुन्धुलीसुतः।**
**विमाने वैष्णवान् वीक्ष्य गोकर्णो वाक्यमब्रवीत्॥६८॥**

**गोकर्ण उवाच**

**अत्रैव बहवः सन्ति श्रोतारो मम निर्मलाः।**
**आनीतानि विमानानि न तेषां युगपत्कुतः॥६९॥**

**श्रवणं समभागेन सर्वेषामिह दृश्यते।**
**फलभेदः कुतो जातः प्रब्रुवन्तु हरिप्रियाः॥७०॥**

**हरिदासा ऊचुः**

**श्रवणस्य विभेदेन फलभेदोऽत्र संस्थितः।**
**श्रवणं तु कृतं सर्वैर्न तथा मननं कृतम्।**
**फलभेदस्ततो जातो भजनादपि मानद॥७१॥**

**सप्तरात्रमुपोष्यैव प्रेतेन श्रवणं कृतम्।**
**मननादि तथा तेन स्थिरचित्ते कृतं भृशम्॥७२॥**

**अदृढं च हतं ज्ञानं प्रमादेन हतं श्रुतम्।**
**संदिग्धो हि हतो मन्त्रो व्यग्रचित्तो हतो जपः॥७३॥**

जो मान्छे भागवतकी कथाबाट वंचित छन् ती त जलमा फोका र जीवहरूमा मच्छरको समान केवल मर्नको लागि मात्रै पैदा भएका हुन्छन्॥६३॥ भला, जसको प्रभावले जड़ र सुकेको बाँसको गाँठो फुट्न सक्छ भने, त्यस भागवतकथाको श्रवण गर्नाले चित्तको गाँठो खुल्नु कुनै चैं ठूलो कुरा हो र॥६४॥ सप्ताहश्रवण गर्नाले मनुष्यको हृदयको गाँठो खुल्दछ, उसको समस्त संशय छिन्न-भिन्न हुन्छन् र सारा कर्म क्षीण हुन्छन्॥६५॥ यो भागवतकथारूप तीर्थ संसारको फोहोरलाई धुनमा धेरै नै पटु छ। विद्वान्हरूको कथन छ कि जब यो स्थित हुन्छ, तब मनुष्यको मुक्ति निश्चित नै संझिनु पर्छ॥६६॥ जतिबेला धुन्धुकारी यी सबै कुराहरू भनिरहेको थियो, जसको लागि वैकुण्ठवासी पार्षदहरूको सहित एउटा विमान आईपुग्योय त्यसको चारैतिर मण्डलाकार प्रकाश फैलिरहेको थियो॥६७॥ सबैको सामुन्ने नै धुन्धुकारी त्यस विमानमा चढ्यो। तब त्यस विमानमा आएका पार्षदहरूलाई देखेर उहाँहरूसँग गोकर्णले यो कुरा भन्नुभयो॥६८॥ गोकर्णले सोध्नुभयो–भगवान्का प्रिय पार्षदहरू! यहाँ त हाम्रा अनेकौं शुद्धहृदय श्रोतागण छन्, उनीहरू सबैको लागि तपाईहरूले एक साथ धेरै विमान किन ल्याउनु भएन? मैले देखेको छु कि यहाँ सबैले समानरूपले कथा सुनेका छन्, फेरि फलमा यस प्रकारको भेद किन भयो यो कुरा भन्नुहोस॥६९-७०॥

**भगवान्का सेवकहरूले भने**–हे मानद! यस फलभेदको कारण यिनीहरूको श्रवणको भेद नै हो। यो ठीक छ कि श्रवण त सबैले समानरूपले नै गरेका हुन्, किन्तु यसको-जस्तो मनन कसैले गरेन। यसैले एक साथ श्रवण गरेर पनि त्यसको फलमा भेद भयो॥७१॥ यस प्रेतले सात दिनसम्म निराहार रहेर श्रवण गरेको थियो, तथा सुनको विषयको स्थिर- चित्तले यो खूब मनन-निदिध्यासन पनि गरिरहन्थ्यो॥७२॥ जुन ज्ञान दृढ़ हुँदैन, त्यो व्यर्थ हुन्छ। यसै प्रकारले ध्यान नदिनाले श्रवणको, संदेहले मन्त्रको र चित्त यता-उति भौंतारिनाले जपको पनि कुनै फल हुँदैन॥७३॥

**अवैष्णवो हतो देशो हतं श्राद्धमपात्रकम्।**
**हतमश्रोत्रिये दानमनाचारं हतं कुलम्॥७४॥**
**विश्वासो गुरुवाक्येषु स्वस्मिन्दीनत्वभावना।**
**मनादोषजयश्चैव कथायां निश्चला मतिः॥७५॥**
**एवमादि कृतं चेत्स्यात्तदा वै श्रवणे फलम्।**
**पुनः श्रवान्ते सर्वेषां वैकुण्ठे वसतिर्ध्रुवम्॥७६॥**
**गोकर्ण तव गोविन्दो गोलोकं दास्यति स्वयम्।**
**एवमुक्त्वा ययुः सर्वे वैकुण्ठं हरिकीर्तनाः॥७७॥**
**श्रावणे मासि गोकर्णः कथामूचे तथा पुनः।**
**सप्तरात्रवतीं भूयः श्रवणं तैः कृतं पुनः॥७८॥**
**कथासमाप्तौ यज्जातं श्रूयतां तच्च नारदः॥७९॥**
**विमानैः सह भक्तैश्च हरिराविर्बभूव ह।**
**जयशब्दा नमःशब्दास्तत्रासन् बहवस्तदा॥८०॥**
**पाञ्चजन्यध्वनिं चक्रे हर्षात्तत्र स्वयं हरिः।**
**गोकर्णं तु समालिङ्ग्याकरोत्स्वसदृशं हरिः॥८१॥**
**श्रोतॄनन्यान् घनश्यामान् पीतकौशेयवाससः।**
**किरीटिनः कुण्डलिनस्तथा चक्रे हरिः क्षणात्॥८२॥**
**तद्ग्रामे ये स्थिता जीवा आश्वचाण्डालजातयः।**
**विमाने स्थापितास्तेऽपि गोकर्णकृपया तदा॥८३॥**
**प्रेषिता हरिलोके ते यत्र गच्छन्ति योगिनः।**
**गोकर्णेन स गोपालो गोलोकं गोपवल्लभम्।**
**कथाश्रवणतः प्रीतो निर्ययौ भक्तवत्सलः॥८४॥**
**अयोध्यावासिनः पूर्वं यथा रामेण संगताः।**
**तथा कृष्णेन ते नीता गोलोकं योगिदुर्लभम्॥८५॥**
**यत्र सूर्यस्य सोमस्य सिद्धानां न गति कदा।**
**तं लोकं हि गतास्ते तु श्रीमद्भगवतश्रवात्॥८६॥**

वैष्णवहीन देश, अपात्रलाई गराईएको श्राद्धको भोजन, अश्रोत्रियलाई दिएको दान र एवं आचारहीन कुल–यी सबैको नाश हुनजान्छ॥७४॥ गुरुवचनमा विश्वास, दीनताको भाव, मनको दोषहरू माथि विजय र कथामा चित्तको एकाग्रता इत्यादि नियमहरूको यदि पालन गरियो भने तब श्रवणको यथार्थ फल मिल्दछ। यदि यी श्रोताहरूले फेरि श्रीमद्भागवतको कथा सुने भने त निश्चय नै सबैलाई वैकुण्ठको प्राप्ति हुनेछ॥७५–७६॥ र गोकर्णजी! तपाईलाई त भगवान् स्वयं आएर गोलोकधाममा लिएर जानुहुनेछ। यी कुराहरू भनेर ती सबै पार्षद हरिकीर्तन गर्दै वैकुण्ठलोकमा गए॥७७॥ श्रावण मासमा गोकर्णजीले फेरि त्यसैगरी सप्ताहक्रमले कथा भन्नुभयो र श्रोताहरूले पनि फेरि त्यसलाई सुने॥७८॥ नारदजी! यस कथाको समाप्तिमा जति पनि भयो, त्यो सबै सुन्नुहोस॥७९॥ त्यहाँ भक्तहरूले भरिएको विमानहरूका साथ भगवान् प्रकट हुनुभयो। चारैतिरबाट खूब जय–जयकार र नमस्कारको ध्वनि हुनलाग्यो॥ ८०॥ भगवान् स्वयं हर्षित भएर आफ्नो पांचजन्य शंखको ध्वनि गर्न लाग्नुभयो र उहाँले गोकर्णलाई हृदयले लगाएर आफ्नो समान बनाउनु भयो॥८१॥ उहाँले क्षणभरमा नै अन्य सबै श्रोताहरूलाई मेघको समान श्यामवर्ण, रेशमी पीताम्बरधारी तथा किरीट र कुण्डलादिले विभूषित गरिदिनु भयो॥८२॥ त्यस गाउँमा कुकुर र चाण्डालपर्यन्त पनि जीव थिए, ती सबै गोकर्णजीको पाले विमानमा चढ़ाईयो॥८३॥ तथा जहाँ योगिजन जान्छन्, त्यस भगवद्धाममा पठाईयो। यस प्रकार भक्तवत्सल भगवान् श्री ष्ण कथाश्रवणले प्रसन्न भएर गोकर्णजीलाई साथ लिएर आफ्नो ग्वालबालहरूको प्रिय गोलोकधाममा जानुभयो॥८४॥ पूर्वकालमा जसरी अयोध्यावासी भगवान् श्रीरामको साथ साकेतधाम गएका थिए, त्यसैगरी भगवान् श्रीकृष्ण ती सबैलाई योगिदुर्लभ गोलोकधाममा लिएर जानुभयो॥८५॥ जुन लोकमा सूर्य, चन्द्रमा र सिद्धहरूको पनि कहिल्यै गति हुन सक्दैन, त्यसमा ती श्रीमद्भागवत श्रवण गर्नाले गए॥८६॥

ब्रूमोऽत्र ते किं फलवृन्दमुज्ज्वलं
सप्ताहयज्ञेन कथासु संचितम्।
कर्णेन गोकर्णकथाक्षरो यैः
पीतश्च ते गभगता न भूयः ॥८७॥
वताम्बुपर्णाशनदेहशोषणै-
स्तपोभिरुग्रैश्चिरकालसंचितैः।
योगैश्चसंयान्ति न तां गतिं वै
सप्ताहगाथाश्रवणेन यान्ति याम्॥८८॥
इतिहासमिमं पुण्यं शाण्डिल्योऽपि मुनीश्वरः।
पठते चित्र कुटस्थो ब्रह्मानन्दपरिप्लुतः ॥८९॥
आख्यानमेतत्परमं पवित्रं
श्रुतं सकृद्वै विदहेदघौघम्।
श्राद्धे प्रयुक्तं पितृतृप्तिमावहे-
न्नित्यं सुपाठादपुनर्भवं च ॥९०॥

नारदजी! सप्ताहयज्ञको द्वारा कथा-श्रवण गर्नाले जसरी उज्ज्वल फल संचित हुन्छ, त्यसको विषयमा हामी तपाईं सँग के भनौ? अजी! जस-जसले आफ्ना कर्णपुटद्वारा गोकर्णजीको कथाको एउटा अक्षरको पनि पान गरे, ती फेरि आमाको गर्भमा आएनन्॥८७॥ जुन गतिलाई मान्छे वायु, जल या पत्ता खाएर शरीर सुकाउनाले, धेरै समयसम्म घोर तपस्या गर्नाले र योगाभ्यासले पनि पाउन सक्दैनन्, त्यसलाई तिनीहरू सप्ताहश्रवणद्वारा सहजमा नै प्राप्त गर्दछन्॥८८॥ यस परम पवित्र इतिहासको पाठ चित्रकूटमा विराजमान मुनीश्वर शाण्डिल्य पनि ब्रह्मानन्दमा मग्न भएर गरि रहनुहुन्छ॥८९॥ यो कथा धेरै पवित्र छ। एकपल्टको श्रवणले नै समस्त पापराशिलाई भस्म गरिदिन्छ। यदि यसलाई श्राद्धको समय पाठ गर्ने हो भने, यसले पितृगणलाई ठूलो तृप्ति हुन्छ र नित्य पाठ गर्नाले मोक्षको प्राप्ति हुन्छ॥९०॥

इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमाहात्म्ये गोकर्णमोक्षवर्णनं नाम पञ्चमोऽध्यायः॥५॥

-★-

# अथ षष्ठोऽध्यायः

## सप्ताह यज्ञको विधि

कुमारा ऊचुः

अथ ते सम्प्रवक्ष्यामः सप्ताहश्रवणे विधिम्।
सहायैर्वसुभिश्चैव प्रायः साध्यो विधिः स्मृतः॥१॥

दैवज्ञं तु समाहूय मुहूर्तं पृच्छ्य यत्नतः।
विवाहे यादृशं वित्तं तादृशं परिकल्पयेत् ॥२॥

नभस्य आश्विनोर्जौ च मार्गशीर्षः शुचिर्नभाः।
एते मासाः कथारम्भे श्रोतॄणां मोक्षसूचकाः॥३॥

मासानां विप्र हेयानि तानि त्याज्यानि सर्वथा।
सहायाश्चेतरे तत्र कर्तव्याः सोद्यमाश्च ये॥४॥

**श्रीसनकादि भन्नुहुन्छ**-नारदजी! अब हामी तपाईंलाई सप्ताहश्रवणको विधि बताउँछौं। यो विधि प्रायः मान्छेहरूको सहायता र धनद्वारा साध्य भनिएको छ॥१॥ पहिले त यत्नपूर्वक ज्योतिषीलाई बोलाएर मुहूर्त सोध्नुपर्दछ तथा विवाहको लागि जसरी धनको प्रबन्ध गरिन्छ त्यसैगरी नै धनको व्यवस्था यसको लागि गर्नुपर्दछ॥२॥ कथा आरम्भ गर्न भाद्रपद, आश्विन, कार्तिक, मार्गशीर्ष, आषाढ़ र श्रावण-यी छः महीना श्रोताहरूको लागि मोक्ष प्राप्तिको कारण हुन्छ॥३॥ देवर्षे! यी महिनाहरूमा पनि भद्रा-व्यतीपात आदि कुयोगहरूलाई सर्वथा त्यागिदिनु पर्दछ। तथा अन्य जो उत्साही छन्, उनीहरूलाई आफ्नो सहायक बनाउनु पर्दछ॥४॥

**देशे देशे तथा सेयं वार्ता प्रेष्या प्रयत्नतः।**
**भविष्यति कथा चात्र आगन्तव्यं कुटुम्बिभिः॥५॥**
**दूरे हरिकथाः केचिद्दूरे चाच्युतकीर्तनाः।**
**स्त्रियः शूद्रादयो ये च तेषां बोधो यतो भवेत्॥६॥**
**देशे देशे विरक्ताये वैष्णवाः कीर्तनोत्सुकाः।**
**तेष्वेवं पत्रं प्रेष्यं च तल्लेखनमितीरितम्॥७॥**
**सतां समाजो भविता सप्तरात्रं सुदुर्लभः।**
**अपूर्वरसरूपैव कथा चात्र भविष्यति॥ ८॥**
**श्रीभागवतपीयूषपानाय रसलम्पटाः।**
**भवन्तश्च तथा शीघ्रमायात प्रेमतत्पराः॥९॥**
**नावकाशः कदाचिच्चेद्दिनमात्रं तथापि तु।**
**सर्वथाऽऽगमनं कार्यं क्षणोऽत्रैव सुदुर्लभः॥१०॥**
**एवमाकारणं तेषां कर्तव्यं विनयेन च।**
**आगन्तुकानां सर्वेषां वासस्थानानि कल्पयेत्॥११॥**
**तीर्थे वापि वने वापि गृहे वा श्रवणं मतम्।**
**विशाला वसुधा यत्र कर्तव्यं तत्कथास्थलम्॥१२॥**
**शोधनं मार्जनं भूमेर्लेपनं धातुमण्डनम्।**
**गृहोस्पस्करमुद्धृत्य गृहकोणे निवेशयेत्॥१३॥**
**अर्वाक्पञ्चाहतो यत्नादास्तीर्णानि प्रमेलयेत्।**
**कर्तव्यो मण्डपः प्रोच्चैः कदलीखण्डमण्डितः॥१४॥**
**फलपुष्पदलैर्विश्वग्वितानेन विराजितः।**
**चतुर्दिक्षु ध्वजारोपो बहुसम्पद्विराजितः॥१५॥**
**ऊर्ध्वं सप्तैव लोकाश्च कल्पनीयाः सविस्तरम्।**
**तेषु विप्रा विरक्ताश्च स्थापनीयाः प्रबोध्य च॥१६॥**
**पूर्वं तेषामासनानि कर्तव्यानि यथोत्तरम्।**
**वक्तुश्चापि तदा दिव्यमासनं परिकल्पयेत्॥१७॥**
**उदङ्मुखो भवेद्वक्ता श्रोता वै प्राङ्मुखस्तदा।**
**प्राङ्मुखश्चेद्भवेद्वक्ता श्रोता चोदङ्मुखस्तदा॥१८॥**

फेरि प्रयत्न गरेर देश–देशान्तरहरू मा यो समाचार पठाउनु पर्दछ कि यहाँ कथा हुँदैछ, सबैजना परिवार सहित आउनुहोला॥५॥ स्त्री र शूद्रादि भगवत्कथा एवं संकीर्तनदेखि टाढ़ा भएका छन्। उनीहरूलाई पनि सूचना होस, यस्तो प्रबन्ध गर्नुपर्दछ॥६॥ देश–देशमा जो विरक्त वैष्णव र हरिकीर्तनको प्रेमी छन्, उनीहरूलाई निमन्त्रणापत्र अवश्य पठाउनु। त्यसलाई लेख्ने विधि यसप्रकार भनिएको छ॥७॥ 'महानुभाव! यहाँ सात दिनसम्म सत्पुरुषहरूको धेरै दुर्लभ समागम रहनेछ र अपूर्व रसमयी श्रीमद्‌भागवतको कथा हुनेछ॥८॥ तपाईहरू भगवद्रसको रसिक हुनुहुन्छ, अतः श्रीभागवतामृतको पान गर्नको लागि प्रेमपूर्वक शीघ्र आउने कृपा गर्नुहोला॥९॥ यदि विशेष अवकाश छैन भने, एकदिनको लागि भए पनि अवश्य नै पार गर्नुपर्नेछ किनकी यहाँको त एक क्षण पनि अत्यन्त दुर्लभ छ'॥१०॥ यस प्रकार विनयपूर्वक उनीहरूलाई निमन्त्रित गर्नु र जो आउँदछन्, तिनीहरूका लागि यथोचित निवासस्थानको प्रबन्ध गर्नु॥११॥ कथाको श्रवण कुनै तीर्थमा, वनमा अथवा आफ्नै घरमा पनि राम्रो मानिएको छ। जहाँ ठूलो चौड़ा मैदान होस, त्यहीं कथास्थल राख्नुपर्दछ॥१२॥ भूमिको शोधन, मार्जन र लेपन गरेर रंगी–बिरंगी ध्वजा–पताका लगाउनु। घरको सबै सामान उठाएर एउटा कुनामा राखिदिनु॥१३॥ पाँच दिन पहिलेदेखि नै यत्नपूर्वक धेरै भन्दा धेरै बिछ्याउने वस्त्र एकत्र गर्नु तथा केराको खम्बाहरूले सुशोभित एउटा अग्लो मण्डप तयार गराउनु॥१४॥ त्यसलाई सबैतिरबाट फल, पुष्प, पत्र र चँदुवाहरूले अलं त गर्नु तथा चारैतिर झंडिहरू लगाएर तरह–तरहका सामानहरूले सजाउनु॥१५॥ त्यस मण्डपमा केही ऊँचाईमा सात विशाल लोकहरूको कल्पना गर्नु र त्यसमा विरक्त ब्राह्मण बोलाई–बोलाई बसाउनु॥१६॥ अगाडी तर्फ उनीहरूको लागि त्यहाँ यथोचित आसन तयार राख्नु। यस पछि वक्ताको लागि पनि एउटा दिव्य सिंहासनको प्रबन्ध गर्नु॥१७॥ यदि वक्ताको मुख उत्तर तिर छ भने, श्रोता पूर्वाभिमुख भएर बस्नु र यदि वक्ता पूर्वाभिमुख भए श्रोता उत्तर तिर मुख गरेर बस्नुपर्दछ॥१८॥

**अथवा पूर्वदिग्ज्ञेया पूज्यपूजकमध्यतः।**
**श्रोतृणामागमे प्रोक्ता देशकालादिकोविदैः॥१९॥**
**विरक्तो वैष्णवो विप्रो वेदशास्त्रविशुद्धिकृत्।**
**दृष्टान्तकुशलो धीरो वक्ता कार्योऽतिनिःस्पृहः॥२०॥**
**अनेकधर्मविभ्रान्ताः स्त्रैणाः पाखण्डवादिनः।**
**शुकशास्त्रकथोच्चारे त्याज्यास्ते यदि पण्डिताः॥२१॥**
**वक्तुः पार्श्वे सहायार्थमन्यः स्थाप्यस्तथाविधः।**
**पण्डितः संशयच्छेत्ता लोकबोधनतत्परः॥२२॥**
**वक्त्रा क्षौरं प्रकर्तव्यं दिनादर्वाग्व्रताप्तये।**
**अरुणोदयोऽसौ निर्वर्त्य शौचं स्नां समाचरेत्॥२३॥**
**नित्यं संक्षेपतः कृत्वा संध्याद्यं स्वं प्रयत्नतः।**
**कथाविघ्नविघाताय गणनाथं प्रपूजयेत्॥२४॥**
**पितृन् संतर्प्य शुद्ध्यर्थं प्रायश्चित्तं समाचरेत्।**
**मण्डलं च प्रकर्तव्यं तत्र स्थाप्यो हरिस्तथा॥२५॥**
**कृष्णमुद्दिश्य मन्त्रेण चरेत्पूजाविधिं क्रमात्।**
**प्रदक्षिणनमस्कारान् पूजान्ते स्तुतिमामाचरेत्॥२६॥**
**संसागरे मग्नं दीनं मां करुणानिधे।**
**कर्ममोहगृहीताङ्गं मामुद्धर भवार्णवात्॥२७॥**
**श्रीमद्भागवतस्यापि ततः पूजाप्रयत्नतः।**
**कर्तव्या विधिना प्रीत्या धूपदीपसमन्विता॥२८॥**
**ततस्तु श्रीफलं धृत्वा नमस्कारं समाचरेत्।**
**स्तुतिः प्रसन्नचित्तेन कर्तव्या केवलं तदा॥२९॥**
**श्रीमद्भागवताख्योऽयं प्रत्यक्षः कृष्ण एव हि।**
**स्वीकृतोऽसि मया नाथ मुक्त्यर्थं भवसागरे॥३०॥**

अथवा वक्ता र श्रोताले पूर्वमुख भएर बस्नुपर्दछ। देश–काल आदिलाई जान्ने महानुभावहरूले श्रोताहरूको लागि यस्तो नै नियम बताउनु भएको छ॥१९॥ जो वेद–शास्त्रको स्पष्ट व्याख्या गर्नमा समर्थ होस, तरह–तरहको दृष्टान्त दिन सकोस तथा विवेकी र अत्यन्त निःस्पृह होस, यस्ता विरक्त र विष्णुभक्त ब्राह्मणलाई वक्ता बनाउनु पर्दछ॥२०॥ श्रीमद्भागवतको प्रवचनमा यस्तो वक्तालाई नियुक्त गर्नुहुँदैन जो पण्डित भएर पनि अनेक धर्महरूको चक्करमा परेको छ, स्त्री–लम्पट एवं पाखण्डको प्रचारक छ॥२१॥ वक्ताको छेउमा नै उनको सहायताको लागि त्यस्तै नै विद्वान अरु राख्नु पर्दछ। उ पनि सबै प्रकारका संशयहरूको निवृत्ति गर्नमा समर्थ र मान्छेहरूलाई सम्झाउन कुशल होस॥२२॥ कथा–प्रारम्भको दिनभन्दा एकदिन पूर्व व्रत ग्रहण गर्नको लागि वक्ताले क्षौर गराउनु पर्दछ। तथा अरुणोदयको समय शौचबाट निवृत्त राम्रो सँग स्नान गर्नु॥२३॥ र संध्यादि आफ्नो नित्यकर्महरूलाई संक्षेपले समाप्त गरेर कथाको विघ्नहरूको निवृत्तिको लागि गणेशजीको पूजन गर्नु॥२४॥ तदनन्तर पितृगणको तर्पण गरेर पूर्व पापहरूको शुद्धिको लागि प्रायश्चित्त गर्नु र एक मण्डल बनाएर त्यसमा श्रीहरिको स्थापना गर्नु॥२५॥ फेरि भगवान् श्री ष्णलाई लक्ष्य गरेर मन्त्रोच्चारणपूर्वक क्रमशः षोडशोपचारविधिले पूजन गर्नु र त्यसको पश्चात् प्रदक्षिणा तथा नमस्कारादि गरेर यस प्रकार स्तुति गर्नु॥२६॥ हे करुणानिधान! म संसार–सागरम डूबेको र बड़ो दीन छु। कर्मको मोहरूपी ग्राहले मलाई समातेर राखेको छ। हजुर यस संसार–सागरबाट मेरो उद्धार गर्नुहोस॥२७॥ यस पश्चात् धूप दीप आदि सामग्रिहरूले श्रीमद्भागवतको पनि बड़ो उत्साह र प्रीतिपूर्वक विधि–विधानले पूजा गर्नु॥२८॥ फेरि पुस्तकको अघिल्तिर नरिवल राखेर नमस्कार गर्नु र प्रसन्नचित्तले यस प्रकार स्तुति गर्नु॥२९॥ श्रीमद्भागवतको रूपमा हजुर साक्षात् श्री ष्णचन्द्र नै विराजमान हुनुहुन्छ। हे नाथ! मैले भवसागरबाट छुटकारा पाउनको लागि हजुरको शरण मा आएको छु॥३०॥

**मनोरथो मदीयोऽयं सफलः सर्वथा त्वया।**
**निर्विघ्नेनैव कर्तव्यो दासोऽहं तव केशव॥३१॥**
**एवं दीनवचः प्रोच्य वक्तारं चाथ पूजयेत्।**
**सम्भूष्य वस्त्रभूषाभिः पूजान्ते तं च संस्तवेत्॥३२॥**
**शुकरुप प्रबोधज्ञ सर्वशास्त्रविशारद।**
**एतत्कथाप्रकाशेन मदज्ञानं विनाशय॥३३॥**
**तदग्रे नियमः पश्चात्कर्तव्यः श्रेयसे मुदा।**
**सप्तरात्रं यथाशक्त्या धारणीयः स एव हि॥३४॥**
**वरणं पञ्चविप्राणां कथाभङ्गनिवृत्तये।**
**कर्तव्यं तैर्हरेर्जाप्यं द्वादशाक्षरविद्यया॥३५॥**
**ब्राह्मणान् वैष्णवांश्चान्यांस्तथा कीर्तनकारिणः।**
**नत्वा सम्पूज्य दत्ताज्ञः स्वयमासनमाविशेत्॥३६॥**
**लोकवित्तधनागारपुत्रचिन्तां व्युदस्य च।**
**कथाचित्तः शुद्धमतिः स लभेत्फलमुत्तमम्॥३७॥**
**आसूर्योदयमारभ्य सार्धत्रिप्रहरान्तकम्।**
**वाचनीया कथा सम्यग्धीरकण्ठं सुधीमता॥३८॥**
**कथाविरामः कर्तव्यो मध्याह्ने घटिकाद्वयम्।**
**तत्कथामनु कार्यं वै कीर्तनं वैष्णवैस्तदा॥३९॥**
**मलमूत्रजयार्थं हि लघ्वाहारः सुखावहः।**
**हविष्यान्नेन कर्तव्यो ह्येकवारं कथार्थिना॥४०॥**
**उपोष्य सप्तरात्रं वै शक्तिश्चेच्छृणुयात्तदा।**
**घृतपानं पयःपानं कृत्वा वै शृणुयात्सुखम्॥४१॥**
**फलाहारेण वा भाव्यमेकभुक्तेन वा पुनः।**
**सुखसाध्यं भवेद्यत्तु कर्तव्यं श्रवणाय तत्॥४२॥**
**भोजनं तु वरं मन्ये कथाश्रवणकारकम्।**
**नोपवासो वरः प्रोक्तः कथाविघ्नकरो यदि॥४३॥**
**सप्ताहव्रतिनां पुंसां नियमाञ्छृणु नारद।**
**विष्णुदीक्षाविहीनानां नाधिकारः कथाश्रवे॥४४॥**

मेरो यो मनोरथ हजुर बिना कुनै विघ्न–बाधा सांगोपांग पूरा गर्नुहोस। हे केशव! म हजुरको दास हुँ॥३१॥ यस प्रकार दीन वचन भनेर फेरि वक्ताको पूजन गर्नु। उहाँलाई सुन्दर वस्त्राभूषणहरूले विभूषित गर्नु र फेरि पूजाको पश्चात् उहाँको यसप्रकार स्तुति गर्नु– ॥३२॥ ‘शुकस्वरूप भगवन्! हजुर समझाउने कलामा कुशल र सबै शास्त्रहरूमा पारंगत हुनुहुन्छय पया यस कथालाई प्रकाशित गरेर मेरो अज्ञान नाश गर्नुहोस’॥३३॥ फेरि आफ्नो कल्याणको लागि प्रसन्नतापूर्वक उहाँको सामुन्ने नियम ग्रहण गर्नु र सात दिनसम्म यथाशक्ति त्यसको पालन गर्नु॥३४॥ कथामा विघ्न न होस, यसको लागि पाँच ब्राह्मणहरू अरु वरण गर्नुय उनीहरूले द्वादशाक्षर मन्त्रद्वारा भगवान्‌की नाम–जप गरुन्॥३५॥ फेरि ब्राह्मण, अन्य विष्णुभक्त एवं कीर्तन गर्नेहरूलाई नमस्कार गरेर उनीहरूको पूजा गर्नु र उनीहरूको आज्ञा लिएर स्वयं आसनमा बस्नु॥३६॥ जुन पुरुष लोक, सम्पत्ति, धन, घर र पुत्रादिको चिन्ता छोड़ेर शुद्धचित्तले केवल कथामा नै ध्यान राख्दछ, त्यसलाई यसको श्रवणको उत्तम फल मिल्दछ॥३७॥ बुद्धिमान् वक्ताले सूर्योदयदेखि नै कथा आरम्भ गरेर साढ़े तीन पहरसम्म मध्यम स्वरले राम्रो सँग कथा प्रवचन गर्नु॥३८॥ मध्याह्न दुई घड़ी सम्म कथा विश्राम गर्नु। त्यस समय कथाको प्रसंगको अनुसार वैष्णवले भगवान्‌को गुणहरूको कीर्तन गर्नुपर्दछ–व्यर्थ कुरा गर्नुहुँदैन॥३९॥ कथाको समय मल–मूत्रको वेगलाई काबूमा राख्नको लागि अल्पाहार सुखकारी हुन्छय यसैले श्रोताले केवल एक समय मात्र हविष्यान्न भोजन गर्नु॥४०॥ यदि शक्ति छ भने त सातै दिन सम्म निराहार रहेर कथा सुन्नु अथवा केवल घ्यू या दूध पिएर सुखपूर्वक श्रवण गर्नु॥४१॥ अथवा फलाहार या एक समय मात्रै भोजन गर्नु। जसले जसलाई नियम सजिलो सँग पालन गरियो, त्यसैलाई कथाश्रवणको लागि ग्रहण गर्नु॥४२॥ म त उपवासको अपेक्षा भोजन राम्रो मान्दछु, यदि त्यो कथाश्रवणमा सहायक छ भने। यदि उपवासले श्रवणमा बाधा पुग्दछ भने त्यो कुनै कामको हुँदैन॥४३॥ नारदजी! नियमले सप्ताह सुन्नेहरूको नियम सुन्नुहोस। विष्णु–दीक्षाले रहित पुरुष कथाश्रवणको अधिकारी हुँदैन॥४४॥

**ब्रह्मचर्यमधःसुप्तिः पत्रावल्यां च भोजनम्।**
**कथासमाप्तौ भुक्तिं च कुर्यान्नित्यं कथाव्रती ॥४५॥**
**द्विदलं मधु तैलं च गरिष्ठान्नं तथैव च।**
**भावदुष्टं पर्युषितं जह्यान्नित्यं कथाव्रती ॥४६॥**
**कामं क्रोधं मदं मानं मत्सरं लोभमेव च।**
**दम्भं मोहं तथा द्वेषं दूरयेच्च कथाव्रती ॥४७॥**
**वेदवैष्णवविप्राणां गुरुगोव्रतिनां तथा।**
**स्त्रीराजमहतां निन्दां वर्जयेद्यः कथाव्रती ॥४८॥**
**रजस्वालान्त्यजम्लेच्छपतितव्रात्यकैस्तथा।**
**द्विजद्विड्वेदबाह्यैश्च न वदेद्यः कथाव्रती ॥४९॥**
**सत्यं शौचं दयां मौनमार्जवं विनयं तथा।**
**उदारमानसं तद्वदेवं कुर्यात्कथाव्रती ॥५०॥**
**दरिद्रश्च क्षयी रोगी निर्भाग्यः पापकर्मवान्।**
**अनपत्यो मोक्षकामः शृणुयाच्च कथामिमाम् ॥५१॥**
**अपुष्पा काकवन्ध्या च वन्ध्या या च मृतार्भका।**
**स्रवद्गर्भा च या नारी तया श्राव्या प्रयत्नतः ॥५२॥**
**एतेषु विधिना श्रावे तदक्षयतरं भवेत्।**
**अत्युत्तमा कथा दिव्या कोटियज्ञफलप्रदा ॥५३॥**
**एवं कृत्वा व्रतविधिमुद्यापनमथाचरेत्।**
**जन्माष्टमीव्रतमिव कर्तव्यं फलकाङ्क्षिभिः ॥५४॥**
**अकिंचनेषु भक्तेषु प्रायो नोद्यापनाग्रहः।**
**श्रवणेनेव पूतास्ते निष्कामा वैष्णव यतः ॥५५॥**
**एवं नगाहयज्ञेऽस्मिन् समाप्ते श्रोतृभिस्तदा।**
**पुस्तकस्य च वक्तुश्च पूजा कार्यातिभक्तितः ॥५६॥**
**प्रसादतुलसीमाला श्रोतृभ्यश्चाथ दीयताम्।**
**मृदङ्गतालललितं कर्तव्यं कीर्तनं ततः ॥५७॥**
**जयशब्दं नमःशब्दं शङ्खशब्दं च कारयेत्।**
**विप्रेभ्यो याचकेभ्यश्च वित्तमन्नं च दीयताम् ॥५८॥**

जो पुरुष नियमले कथा सुन्दछन्, उनीहरूले ब्रह्मचर्य पूर्वक रहनु, भूमिमा शयन गर्नु र नित्यप्रति कथा समाप्त भएपछि टपरीमा भोजन गर्नुपर्दछ ॥४५॥ दाल, मह, तेल, गरिष्ठ अन्न, भावदूषित पदार्थ र बासी अन्न–यी सबैको उसले सर्वथा त्याग गर्नुपर्दछ ॥४६॥ काम, क्रोध, मद, मान, मत्सर, लोभ, दम्भ, मोह र द्वेषलाई त आफ्नो नजिक पनि ढिम्किन दिनुहुँदै ॥४७॥ श्रोताले वेद, वैष्णव, ब्राह्मण, गुरु, गोसेवक तथा स्त्री, राजा र महापुरुषहरूको निदा बच्नुपर्दछ ॥४८॥ नियमले कथा सुन्ने पुरुषहरूले रजस्वला स्त्री, अन्त्यज, म्लेच्छ, पतित, गायत्रीहीन द्विज, ब्राह्मणहरूसँग द्वेष गर्ने तथा वेदलाई नमान्नेहरू संग कुरा पनि गर्नुहुँदैन ॥४९॥ सर्वदा सत्य, शौच, दया, मौन, सरलता, विनय र उदारताको व्यवहार गर्नुपर्दछ ॥५०॥ धनहीन, क्षयरोगी, कुनै अन्य रोगले पीड़ित, भाग्यहीन, पापी, पुत्रहीन र मुमुक्षु पनि यो कथा श्रवण गरुन् ॥५१॥ जुन स्त्रीको रजोदर्शन रोकिएको छ, जसको एउटै मात्र सन्तान भएर रोकिएको छ, जो बाँझी छे, जस्को सन्तान भएर पनि मर्दछ अथवा जसको गर्भपात हुने गर्दछ, ती सबै प्रयत्नपूर्वक यस कथालाई सुनुन् ॥५२॥ यी सबै यदि विधिवत् कथा सुन्दछन् भने अक्षय फलको प्राप्ति हुन्छ। यो अत्युत्तम दिव्य कथा करोड़ौं यज्ञको फल दिनेवाला हो ॥५३॥ यस प्रकार यस व्रतको विधिहरूको पालन गरेर फेरि उद्यापन गर्नु। जसलाई यसको विशेष फलको इच्छा छ, उनीहरूले जन्माष्टमी–व्रतको समान नै यस कथाव्रतको उद्यापन गर्नु ॥५४॥ किन्तु जो भगवान्का अकिंचन भक्त छन्, उनीहरूको लागि उद्यापनको कुनै आग्रह छैन। ती श्रवणले नै पवित्र छन् किनकी उनीहरू त निष्काम भगवद्भक्त हुन् ॥५५॥ यस प्रकार जब सप्ताहयज्ञ समाप्त हुन्छ, तब श्रोताहरूले अत्यन्त भक्तिपूर्वक पुस्तक र वक्ताको पूजा गर्नुपर्दछ ॥५६॥ फेरि वक्ताले श्रोताहरूलाई प्रसाद, तुलसी र प्रसादी मालाहरू दिनु तथा सबैजना मृदंग र झाँझको मनोहर ध्वनिले सुन्दर कीर्तन गर्नु ॥५७॥ जय–जयकार, नमस्कार र शंखध्वनिको घोष गराउनु तथा ब्राह्मण र याचकहरूलाई धन र अन्न दिनु ॥५८॥

**विरक्तश्चेद्ववेच्छ्रोता गीता वाच्या परेऽहनि।**
**गृहस्थश्चेत्तदा होमः कर्तव्यः कर्मशान्तये ॥५९॥**
**प्रतिश्लोकं तु जुहुयाद्विधिना दशमस्य च।**
**पायसं मधु सर्पिश्च तिलान्नादिकसंयुतम् ॥६०॥**
**अथवा हवनं कुर्याद्गायत्र्या सुसमाहितः।**
**तन्मयत्वात्पुराणस्य परमस्य च तत्त्वतः ॥६१॥**
**होमाशक्तौ बुधो हौम्यौ दद्यात्तत्फलसिद्धये।**
**नानाच्छिद्रनिरोधार्थं न्यूनताधिकतानयोः ॥६२॥**
**दोषयोः प्रशमार्थं च पठेन्नामसहस्रकम्।**
**तेन स्यात्सफलं सर्वं नास्त्यस्मादधिकं यतः ॥६३॥**
**द्वादश ब्राह्मणान् पश्चाद्भोजयन्मधुपायसैः।**
**दद्यात्सुवर्णं धेनुं च व्रतपूर्णत्वहेतवे ॥६४॥**
**शक्तौ पलत्रयमितं स्वर्णसिंहं विधाय च।**
**तत्रास्य पुस्तकं स्थाप्यं लिखितं ललिताक्षरम् ॥६५॥**
**सम्पूज्यावाहनाद्यैस्तदुपचारैः सदक्षिणम्।**
**वस्त्रभूषणगन्धाद्यैः पूजिताय यतात्मने ॥६६॥**
**आचार्याय सुधीर्दत्त्वा मुक्तः स्याद्भवबन्धनैः।**
**एवं कृते विधाने च सर्वपापनिवारणे ॥६७॥**
**फलदं स्यात्पुराणं तु श्रीमद्भागवतं शुभम्।**
**धर्मकामार्थमोक्षाणां साधनं स्यान्न संशयः ॥६८॥**

**कुमारा ऊचुः**

**इति ते कथितं सर्वं किं भूयः श्रोतुमिच्छसि।**
**श्रीमद्भागवतेनैव भुक्तिमुक्ती करे स्थिते ॥६९॥**

**सूत उवाच**

**इत्युक्त्वा ते महात्मानः प्रोचुर्भागवतीं कथाम्।**
**सर्वपापहरां पुण्यां भुक्तिमुक्तिप्रदायिनीम् ॥७०॥**
**शृण्वतां सर्वभूतानां सप्ताहं नियतात्मनाम्।**
**यथाविधि ततो देवं तुष्टुवुः पुरुषोत्तमम् ॥७१॥**

श्रोता विरक्त छ भने कर्मको शान्तिको लागि दोस्रो दिन गीतापाठ गर्नु, यदि गृहस्थ छ भने हवन गर्नु ॥५९॥ त्यस हवनमा दशमस्कन्धको एक–एक श्लोक पढ़ेर विधिपूर्वक खीर, मधु, घृत, तिल र अन्नादि सामग्रिहरूले आहुति दिनु ॥६०॥ अथवा एकाग्र चित्तले गायत्री–मन्त्रद्वारा हवन गर्नुय किनकी तत्त्वतः यो महापुराण गायत्री स्वरूप नै हो ॥६१॥ होम गर्ने शक्ति छैन भने त्यसको फल प्राप्त गर्नको लागि ब्राह्मणहरूलाई हवनसामग्री दान गर्नु तथा नाना प्रकारका त्रुटिहरूलाई हटाउनको लागि र विधिमा फेरि जो न्यूनाधिकता रहेको छ, त्यस दोषको शान्तिको लागि विष्णुसहस्रनामको पाठ गर्नु। त्यसले गर्दा सबै कर्म सफल हुन्छन् किनकी कुनै पनि कर्म यो भन्दा ठूलो छैन ॥६२–६३॥ फेरि बाह्र ब्राह्मणलाई खीर र मधु आदि उत्तम–उत्तम पदार्थ ख्वाउनु व्रतको पूर्तिको लागि गाई र सुवर्णको दान गर्नु ॥ ६४॥सामर्थ्य छ भने तीन तोला सुनको एउटा सिंहासन बनाएर त्यसमा सुन्दर अक्षरमा लेखिएको श्रीमद्भागवतको पुस्तक राखेर त्यसको आवाहनादि विविध उपचारहरूले पूजा गरेर फेरि जितेन्द्रिय आचार्यलाई– वस्त्र, आभूषण एवं गन्धादिले पूजन गरेर दक्षिणा सहित दान दिनु ॥६५–६६॥ यसरी गर्नाले त्यो बुद्धिमान् दाता जन्म–मरणको बन्धनबाट मुक्त हुन्छ। यो सप्ताहपारायणको विधि सबै पापहरूको निवृत्ति गर्दछ। यसको यस प्रकार ठीक–ठीक पालन गर्नाले यो मंगलमय भागवतपुराण अभीष्ट फल प्रदान गर्दछ तथा अर्थ, धर्म, काम र मोक्ष–यी चारैको प्राप्तिको साधन हुनजान्छ यसमा केही सन्देह छैन ॥६७–६८॥

**सनकादि भन्नुहुन्छ**–नारदजी! यस प्रकार तपाईलाई यो सप्ताह–श्रवणको विधि हामीले सबै नै सुनाईदियौं, अब अरु के सुन्न चाहनुहुन्छ? यस श्रीमद्भागवतले भोग र मोक्ष दुबै हातमा पर्छन ॥६९॥

**सूतजी भन्नुहुन्छ**–शौनकजी! यसरी भनेर महामुनि सनकादिले एक सप्ताहसम्म विधिपूर्वक यस सर्वपापनाशिनी, परम पवित्र तथा भोग र मोक्ष प्रदान गर्ने भागवतकथाको प्रवचन गर्नुभयो। सबै प्राणिहरूले नियम पूर्वक यसलाई श्रवण गरे। यस पछि उहाँले विधिपूर्वक भगवान् पुरुषोत्तमको स्तुति गर्नुभयो ॥७०–७१॥

**तदन्ते ज्ञानवैराग्यभक्तीनां पुष्टता परा।**
**तारुण्यं परमं चाभूत्सर्वभूतमनोहरम् ॥७२॥**
**नारदश्च कृतार्थोऽभूत्सिद्धे स्वीये मनोरथे।**
**पुलकीकृतसर्वाङ्गः परमानन्दसम्भृतः ॥७३॥**
**एवं कथां समाकर्ण्य नारदो भगवत्प्रियः।**
**प्रेमगद्गदया वाचा तानुवाच कृताञ्जलिः ॥७४॥**

**नारद उवाच**

**धन्योऽस्म्यनुगृहीतोऽस्मि भवद्भिः करुणापरैः।**
**अद्य मे भगवाँल्लब्धः सर्वपापहरो हरिः ॥७५॥**
**श्रवणं सर्वधर्मेभ्यो वरं मन्ये तपोधनाः।**
**वैकुण्ठस्थो यतःकृष्णः श्रवणाद्यस्य लभ्यते ॥७६॥**

**सूत उवाच**

**एवं ब्रुवति वै तत्र नारदे वैष्णवोत्तमे।**
**परिभ्रमन् समायातः शुको योगेश्वरस्तदा ॥७७॥**
**तत्राययौ षोडशवार्षिकस्तदा**
**व्यासात्मजो ज्ञानमहाब्धिचन्द्रमाः।**
**कथावसाने निजलाभपूर्णः**
**प्रेम्णा पठन् भागवतं शनैः शनैः ॥७८॥**
**दृष्ट्वा सदस्याः परमोरुतेजसं**
**सद्यः समुत्थाय ददुर्महासनम्।**
**प्रीत्या सुरर्षिस्तमपूजयःसुखं**
**स्थितोऽवदत्संशृणुतामलां गिरम् ॥७९॥**

**श्रीशुक उवाच**

**निगमकल्पतरोर्गलितं फलं**
**शुकमुखादमृतद्रवसंयुतम्।**
**पिबत भागवतं रसमालयं**
**मुहुरहो रसिका भुवि भावुकाः ॥८०॥**

कथाको अन्तमा ज्ञान–वैराग्य र भक्तिलाई ठूलो बल मिल्यो र तीनै एकदम तरुण भएर सबै जीवहरूको चित्त आफुतिर आकर्षित गर्न लागे ॥७२॥ आफ्नो मनोरथ पूरा भएकोले नारदजीलाई पनि धेरै प्रसन्नता भयो, उहाँको सम्पूर्ण शरीरमा रोमांच भएर आयो र उहाँ परमानन्दले पूर्ण हुनुभयो ॥७३॥ यस प्रकार कथा श्रवण गरेर भगवान्का प्यारो नारदजी हात जोड़ेर प्रेमगद्गद वाणीले सनकादिलाई भन्नलाग्नु भयो ॥७४॥

**नारदजीले भन्नुभयो**–म धन्य छु, हजुरहरूले करुणा गरेर मलाई धेरै अनुगृहीत गर्नुभएको छ, आज मलाई सर्वपापहारी भगवान् श्रीहरिको नै प्राप्ति भएको छ ॥७५॥ हे तपोधनहरू! म श्रीमद्भागवत–श्रवणलाई नै सबै धर्महरू भन्दा श्रेष्ठ मान्दछु, किन भने यसको श्रवणले वैकुण्ठ (गोलोक)–विहारी श्रीकृष्णको प्राप्ति हुन्छ ॥७६॥

**सूतजी भन्नुहुन्छ**–शौनकजी! वैष्णवश्रेष्ठ नारदजी यसरी नै भनिरहनु भएको थियो कि त्यहाँ घुम्दै–फिर्दै योगेश्वर शुकदेवजी आउनुभयो ॥७७॥ कथा समाप्त हुने बित्तिकै व्यासनन्दन श्रीशुकदेवजी त्यहाँ आईपुग्नु भयो। सोह्र वर्षको–जस्तो आयु, आत्मलाभले पूर्ण, ज्ञानरूपी महासागरको संवर्धन गर्नको लागि चन्द्रमाको समान उहाँ प्रेमले मधुर–मधुर श्रीमद्भागवतको पाठ गरिरहनु भएको थियो॥ ७८॥ परम तेजस्वी शुकदेवजीलाई देखेर सम्पूर्ण सभासद् झटपट उठे र उहाँलाई एउटा ऊँचो आसनमा विराजमान गराए। फेरि देवर्षि नारदजीले उहाँको प्रेमपूर्वक पूजन गर्नुभयो। उहाँले सुखपूर्वक बसेर भन्नुभयो–'तपाईहरू मेरो निर्मल वाणी सुन्नुहोस' ॥७९॥ श्रीशुकदेवजीले भन्नुभयो–रसिक एवं भावुक जन! यो श्रीमद्भागवत वेदरूप कल्पवृक्षको परिपक्व फल हो। श्रीशुकदेवरूप शुकको मुखको संयोग हुनाले अमृतरसद्वारा परिपूर्ण छ। यसमा रस–नै–रस छ यसमा न बोक्रा छ न गुदी। यो यही लोकमा सुलभ छ। जबसम्म शरीरमा चेतना रहन्छ, तबसम्म तपाईहरू बारम्बार यसको पान गर्नु ॥८०॥

**धर्मः प्रोज्झितकैतवोऽत्र परमो निर्मत्सराणां सतां**
**वेद्यं वास्तवमत्र वस्तु शिवदं तापत्रयोन्मूलनम्।**
**श्रीमद्भागवते महामुनिकृते किं वा परैरीश्वरः**
**सद्यो हृद्यवरुध्यतेऽत्र कृतिभिःशुश्रुषुभिस्तत्क्षणात्॥८१॥**

**श्रीमद्भागवतं पुराणतिलकं यद्वैष्णवानां धनं**
**यस्मिन् पारमहंस्यमेवममलं ज्ञानं परं गीयते।**
**यत्र ज्ञानविरागभक्तिसहितं नैष्कर्म्यमाविष्कृतं**
**तच्छृण्वन्प्रपठन्विचारणपरो भक्त्या विमुच्येन्नरः॥८२॥**

**स्वर्गे सत्ये च कैलासे वैकुण्ठे नास्त्ययं रसः।**
**अतः पिबन्तु सद्भाग्या मा मा मुञ्चत कर्हिचित्॥८३॥**

**सूत उवाच**

**एवं ब्रुवाणे सति बादरायणौ**
**मध्ये सभायां हरिराविरासीत्।**
**प्रह्लादबल्युद्धवफाल्गुनादिभि-**
**र्वृतः सुरर्षिस्तमपूजयच्च तान्॥८४॥**

**दृष्ट्वा प्रसन्नं महदासने हरिं**
**ते चक्रिरे कीर्तनमग्रतस्तदा।**
**भवो भवान्या कमलासनस्तु**
**तत्रागमत्कीर्तनदर्शनाय॥८५॥**

**प्रह्लादस्तालधारी तरलगतितया चोद्धवःकांस्यधारी**
**वीणाधारी सुरर्षिः स्वरकुशलतया रागकर्तार्जुनोऽभूत्।**
**इन्द्रोऽवादीनन्मृदङ्गं जय जय सुकराः कीर्तने ते कुमारा**
**यत्राग्रे भाववक्ता सरसरचनया व्यासपुत्रो बभूव॥८६॥**

महामुनि व्यासदेवले श्रीमद्भागवतमहापुराणको रचना गर्नुभएको हो। यसमा निष्कपट-निष्काम परमधर्मको निरूपण गरिएको छ। यसमा शुद्धान्तःकरण सत्पुरुषहरूले जान्नयोग्य कल्याणकारी वास्तविक वस्तुको वर्णन छ, जसले तीनै तापहरूको शान्ति हुन्छ। यसको आश्रय लिएपछि अन्य कुनै शास्त्र अथवा साधनको आवश्यकता पर्दैन। जब कुनैदिन पुण्यात्मा पुरुष यसको श्रवणको इच्छा गर्दछन्, त्यतिखेरै ईश्वर अविलम्ब उनीहरूको हृदयमा अवरुद्ध हुनजान्छन्॥८१॥ यो भागवत पुराणहरूको तिलक र वैष्णवको धन हो। यसमा परमहंसहरूको प्राप्य विशुद्ध ज्ञानको नै वर्णन गरिएको छ तथा ज्ञान, वैराग्य र भक्तिको सहित निवृत्तिमार्गलाई प्रकाशित गरिएको छ। जो पुरुष भक्तिपूर्वक यसको श्रवण, पठन र मननमा तत्पर रहन्छ, त्यो मुक्त हुनजान्छ॥८२॥ यो रस स्वर्गलोक, सत्यलोक, कैलास र वैकुण्ठम पनि पाईदैन। यसैले भाग्यवान् श्रोताहरू! तपाईहरू यसको धेरै-भन्दा-धेरै पान गर्नुहोस। यसलाई कहिल्यै नछोड्न कहिल्यै नछोड्नु॥८३॥ **सूतजी भन्नुहुन्छ**-श्रीशुकदेवजी यस प्रकार भनिनै रहनु भएको थियो कि त्यो सभाको बीचौमा प्रह्लाद, बलि, उद्धव र अर्जुन आदि पार्षदहरूका सहित साक्षात् श्रीहरि प्रकट हुनुभयो। तब देवर्षि नारदले भगवान् र उहाँको भक्तहरूको यथोचित पूजा गर्नुभयो॥८४॥ भगवानलाई प्रसन्न देखेर देवषिलने उहाँलाई एक विशाल सिंहासनमा विराजमान गराउनु भयो र सबैजना उहाँको सामुन्ने संकीर्तन गर्नथाले। त्यस कीर्तनलाई दर्शन गर्नको लागि श्रीपार्वतीजीको सहित महादेवजी र ब्रह्माजी पनि आउनु भयो॥८५॥ कीर्तन आरम्भ भयो। प्रह्लादजी त चंचलगति (फुर्तीलो) भएको कारण करताल बजाउन लाग्नु भयो, उद्धवजीले झाँझ उठाउनु भयो, देवर्षि नारद वीणाको ध्वनि गर्नलाग्नु भयो, स्वर-विज्ञान (गान-विद्या)-मा कुशल भएको कारण अर्जुन राग अलाप्न लाग्नुभयो, इन्द्रले मृदंग बजाउन आरम्भ गर्नुभयो, सनकादि बीच-बीचमा जयघोष गर्नलाग्नु भयो र यी सबैको अगाडि शुकदेवजी तरह-तरहको सरस अंगभंगी गरेर भाव बताउन लाग्नुभयो॥८६॥

ननर्त मध्ये त्रिकमेव तत्र
भक्त्यादिकानां नटवत्सुतेजसाम्।
अलौकिकं कीर्तनमेतदीक्ष्य
हरिः प्रसन्नोऽपि वचोऽब्रवीत्तत्॥८७॥
मत्तो वरं भाववृताद्वृणुध्वं
प्रीतः कथाकीर्तनतोऽस्मि साम्प्रतम्।
श्रुत्वेति तद्वाक्यमतिप्रसन्नाः
प्रेमाद्रचित्ता हरिमूचिरे ते॥८८॥
नगाहगाथासु च सर्वभक्तै-
रेभिस्त्वया भाव्यमिति प्रयत्नात्।
मनोरथोऽयं परिपूरणीय-
स्तथेति चोक्त्वान्तरधीयताच्युतः॥८९॥
ततोऽनमत्तच्चरणेषु नारद-
स्तथा शुकादीनपि तापसांश्च।
अथ प्रहृष्टाः परिनष्टमोहाः
सर्वे ययुः पीतकथामृतास्ते॥९०॥
भक्तिः सुताभ्यां सह रिक्ष्ता सा
शास्त्रे स्वकीयेऽपि तदा शुकेन।
अतो हरिर्भागवतस्य सेवना-
च्चित्तं समायाति हि वैष्णवानाम्॥९१॥
दारिद्र्यदुःखज्वरदाहितानां
मयापिशाचीपरिमर्दितानाम्।
संसारसिन्धौ परिपतितानां
क्षेमाय वै भागवतं प्रगर्जति॥९२॥

शौनक उवाच

शुकेनोक्तं कदा राज्ञे गोकर्णेन कदा पुनः।
सुरर्षये कदा ब्राह्मैश्छिन्धि मे संशयं त्विमम्॥९३॥

सूत उवाच

आकृष्णनिर्गमात्त्रिंशद्वर्षाधिकगते कलौ।
नवमीतो नभस्ये च कथारम्भं शुकोऽकरोत्॥९४॥
परीक्षिच्छ्रवणान्ते च कलौ वर्षशतद्वये।
शुद्धे शुचौ नवम्यां च धेनुजोऽकथयत्कथाम्॥९५॥

यी सबैको बीचमा परम तेजस्वी भक्ति, ज्ञान र वैराग्य नटहरूको समान नाच्नलागे। यस्तो अलौकिक कीर्तन देखेर भगवान् प्रसन्न हुनुभयो र यस प्रकार भन्नलाग्नुभयो- ॥८७॥ 'म तिमीहरूको यस कथा र कीर्तनले धेरै प्रसन्न भएको छु, तिमीहरूले भक्तिभावले मलाई यस समय वशमा गरेका छौ। अतः तिमीहरू मसँग वरदान माँग'। भगवान्का यी वचन सुनेर सबैजना धेरै प्रसन्न भए र प्रेमपूर्ण चित्तले भगवान्सँग भन्नथाले॥८८॥ 'भगवन्! हाम्रो यो अभिलाषा छ कि भविष्यमा पनि जहाँ-कहीं सप्ताह-कथा हुन्छ, त्यहाँ हजुर यी पार्षदहरूको सहित अवश्य पदार्पण गर्नुहोस। हाम्रो यो मनोरथ पूर्ण गरिदिनुहोस। भगवान्'तथास्तु' भनेर अन्तर्धान हुनुभयो॥८९॥ यसपछि नारदजीले भगवान् तथा उहाँका पार्षदहरूको चरणलाई लक्ष्य गरेर प्रणाम गर्नुभयो र फेरि शुकदेवजी आदि तपस्विहरूलाई पनि नमस्कार गर्नुभयो। कथामृतको पान सबैलाई ठूलो आनन्द भयो, उनीहरूको सबै मोह नष्ट भयो। फेरि ती सबै आ-आफ्ना स्थानहरू तिर गए॥९०॥ त्यस समय शुकदेवजीले भक्तिलाई उसको पुत्रहरूसहित आफ्नो शास्त्रमा स्थापित गरिदिनु भयो। यसैले भागवतको सेवन गर्नाले श्रीहरि वैष्णवहरूको हृदयमा विराजनु हुन्छ॥९१॥ जो मान्छे दरिद्रताको दुःखज्वरको ज्वालाले दग्ध भईरहेका छन्, जसलाई माया-पिशाचीले किचेको छ तथा जो संसार समुद्रमा डूबिरहेका छन्, उनीहरूको कल्याण गर्नको लागि श्रीमद्भागवत सिंहनाद गरिरहेको छ॥९२॥

**शौनकजीले सोध्नुभयो**-सूतजी! शुकदेवजीले राजा परीक्षित्लाई, गोकर्णले धुन्धुकारीलाई र सनकादिले नारदजीलाई कहिले-कहिले यो ग्रन्थ सुनाउनु भएको थियो-मेरो यो संशय हटाईदिनुहोस!॥९३॥

**सूतजीले भन्नुभयो**-भगवान् श्रीकृष्णको स्वधामगमन पछि कलियुगको तीस वर्षभन्दा केही अधिक बितेपछि भाद्रपदमासको शुक्ल नवमीमा शुकदेवजीले कथा आरम्भ गर्नुभएको थियो॥९४॥ राजा परीक्षित्को कथा श्रवण पछि कलियुगको दुईसय वर्ष बितिसकेपछि आषाढ़मासको शुक्ला नवमीमा गोकर्णजीले यो कथा सुनाउनु भयो॥९५॥

**तस्मादपि कलौ प्राप्ते त्रिंशद्वर्षगते सति।**
**ऊचुरूर्जे सिते पक्षे नवम्यां ब्रह्मणः सुताः॥९६॥**
**इत्येतत्ते समाख्यातं यत्पृष्टोऽहं त्वयानघ।**
**कलौ भागवती वार्ता भवरोगविनाशिनी॥९७॥**
**कृष्णप्रियं सकलकल्मषनाशनं च**
**मुक्त्येकहेतुमिह भक्तिविलासकारि।**
**सन्तः कथानकमिदं पिबतादरेण**
**लोके हि तीर्थपरिशीलनसेवया किम्॥९८॥**
**स्वपुरुषमपि वीक्ष्य पाशहस्तं**
**वदति यमः किल तस्य कर्णमूले।**
**परिहर भगवत्कथासु मत्तान्**
**प्रभुरहमन्यनृणां न वैष्णवानाम्॥९९॥**
**असारे संसारे विषयविषसङ्गाकुलधियः**
**क्षणार्धं क्षेमार्थं पिबत शुकगाथातुलसुधाम्।**
**किमर्थं व्यर्थं भो व्रजथ कुपथे कुत्सितकथे**
**परीक्षित्साक्षी यच्छ्रवणगतमुक्त्युक्तिकथने॥१००॥**
**रसप्रवाहसंस्थेन श्रीशुकेनेरिता कथा।**
**कण्ठे सम्बध्यते येन स वैकुण्ठप्रभुर्भवेत्॥१०१॥**
**इति च परमगुह्यं सर्वसिद्धान्तसिद्धं**
**सपदि निगदितं ते शास्त्रपुञ्जं विलोक्य।**
**जगति शुककथातो निर्मलं नास्ति किञ्चित्**
**पिब परसुखहेतोर्द्वादशस्कन्धसारम्॥१०२॥**
**एतां यो नियततया शृणोति भक्त्या**
**यश्चैनां कथयति शुद्धवैष्णवाग्रे।**
**तौ सम्यग्विधिकरणात्फलं लभेते**
**याथार्थ्यान्न हि भुवने किमप्यसाध्यम्॥१०३॥**

यसको पछि कलियुगको तीस वर्ष अरु बितेपछि कार्तिक शुक्ल नवमीदेखि सनकादिले कथा आरम्भ गर्नुभएको थियो॥९६॥ निष्पाप शौनकजी! तपाईले जतिपनि सोध्नुभएको थियो त्यसको उत्तर मैले तपाईलाई दिईसके। यस कलियुगमा भागवतको कथा भवरोगको रामबाण औषधि हो॥९७॥ संतजन! तपाईहरू आदरपूर्वक यस कथामृतको पान गर्नुहोस। यो श्रीकृष्णलाई अत्यन्त प्रिय, सम्पूर्ण पापहरूको नाश गर्ने, मुक्तिको एकमात्र कारण र भक्तिलाई बढ़ाउनेवाला हो। लोकमा अन्य कल्याणकारी साधनहरूको विचार र तीर्थहरूको सेवन गर्नाले के हुन्छ र॥९८॥ आफ्ना दूतलाई हातमा पाश बोकेको देखेर यमराज तिनीहरूको कानमा भन्दछन्–'हेर, जो भगवान्‌को कथावार्तामा मत्त भईरहेका छन्, भने तिनीहरूबाट टाढै रहनु; म अरुलाई नै दण्डदिने शक्ति राख्दछु वैष्णवहरूलाई होईन'॥९९॥ यस असार संसारमा विषयरूप विषको आसक्तिको कारण व्याकुल बुद्धिवाला पुरुषहरू! आफ्नो कल्याणको उद्देश्यले आधा क्षणकोलागि पनि यस शुककथारूप अनुपम सुधाको पान गर। प्यारा सज्जनहरू! निन्दित कथाले युक्त कुपथमा व्यर्थ नै किन भौंतारिईरहन्छौ? यस कथा कानमा प्रवेश गर्ने बित्तिकै मुक्ति हुन्छ, यस कुराको साक्षी राजा परीक्षित् छन्॥१००॥ श्रीशुकदेवजीले प्रेमरसको प्रवाहमा स्थित भएर यस कथालाई भन्नुभएको थियो। यसको जसको कण्ठसँग सम्बन्ध हुनजान्छ त्यो वैकुण्ठको स्वामी बन्दछ॥१०१॥ शौनकजी! मैले अनेक शास्त्रहरूलाई हेरेर तपाईहरूलाई यो परम गोप्य रहस्य भर्खरै सुनाएको छु। सबै शास्त्रहरूको सिद्धान्तको यही निचोड़ छ। संसारमा यस शुकशास्त्रभन्दा अधिक पवित्र अन्य कुनै वस्तु छैनय अतः तपाईहरू परमानन्दको प्राप्तिका लागि यस द्वादशस्कन्धरूप रसको पान गर्नुहोस॥१०२॥ जो पुरुष नियमपूर्वक यस कथाको भक्ति–भावले श्रवण गर्दछ, र जो शुद्धान्तःकरण भगवद्भक्तहरूको सामुन्ने यसलाई सुनाउँदछय ती दुबैले नै विधिको पूरा–पूरा पालन गरेको कारण यसको यथार्थ फल पाउँदछन् उनीहरूका लागि त्रिलोकिमा केही पनि असाध्य रहँदैन॥१०३॥

**इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमाहात्म्ये श्रवणविधिकथनं नाम षष्ठोऽध्यायः॥६॥**

**॥समाप्तमिदं श्रीद्भागवतमाहात्म्यम्॥**

**॥हरिः ॐ तत्सत्॥**

–★–

